जयतु संस्कृतम् ग्रन्थमाला – १६

आचार्य पुण्यानन्दविरचितः

# कामकलाविलासः

("श्रीविद्याप्रकाश" – नेपालीपद्यव्याख्यया "गार्ग्यायणी" – नेपालीगद्यव्याख्यया च विभूषितः)


श्रीविद्याप्रकाशव्याख्याकारः

**प्रा. विद्यानाथ उपाध्याय भट्ट**

गार्ग्यायणीव्याख्याकारः सम्पादकश्च

**माधवप्रसाद लामिछाने**

उपप्राध्यापक, पूर्वमीमांसा तथा तन्त्रविभाग
नेपाल संस्कृत विश्वविद्यालय, वाल्मीकि विद्यापीठ
प्रदर्शनीमार्ग, काठमाडौं ।



**जयतु संस्कृतम्**
काठमाडौं, नेपाल

**पुस्तकनाम** : कामकलाविलासः

**सम्पादक** : माधवप्रसाद लामिछाने

**प्रकाशक** : **जयतु संस्कृतम्**
**काठमाडौं, नेपाल फोन** : ०१-४२३०३७१

**संस्करणम** : प्रथम

**पुस्तकसङ्ख्या** : १००० प्रति





**मुद्रक** : किशोर अफसेट प्रेस प्रा.लि., काठमाडौं, नेपाल
फोन : ०१ ४२२५४४

ISBN :

**मूल्य** : १११/-

JAYATU SANSKRITAM GRANTHAMALA–16

ĀCĀRYA PUṆYĀNANDA's

# KĀMAKALĀVILĀSḤ

With two commentaries

ŚRĪ**VIDYĀPRAKĀŚ**

by

Prof. **VIDYANATH UPADHYAYA BHATTA**

&

**GĀRGYĀYAṆĪ**

by

**MADHAV PRASAD LAMICHHANE**

Commented and Edited by

**MADHAV PRASAD LAMICHHANE**

Lecturer, Department of Pūrvamīmāsā and Tantra,
Nepal Sanskrit University, Valmeeki Campus,
Exhibition Road, Kathmandu.

**JAYATU SANSKRITAM**

Kathmandu, Nepal

**Book's Name** : **KĀMAKALĀVILĀSḤ**

**Publishers** : **JAYATU SANSKRITAM**
Kathmandu, Nepal
Telephone : 01- 4230371



**First Edition** : 2014

**Printers** : Kishor Offset Press(P.) Ltd.
Kathmandu, Nepal
Telephone : 01-4022544

**Copies** : 500

**ISBN** :

**Price** : 111/-

# प्रकाशकीय

वि.सं २००४ सालमा एकतन्त्रीय राणाशासनको विरोधमा श्रीभद्र शर्मा, राजेश्वर देवकोटा, कमलराज रेग्मी आदि विद्यार्थी नेताहरूको नेतृत्वमा सञ्चालित जयतु संस्कृतम् नामक विद्यार्थी आन्दोलनले नेपालको शैक्षिक एवं राजनैतिक इतिहासमा महत्त्वपूर्ण स्थान ओगटेको छ । वि.सं २०५४ सालमा सो आन्दोलनले ५० वर्ष पूरा गरेको उपलक्ष्यमा स्वर्णमहोत्सवको आयोजना गरी वि.सं.२०५५ सालमा सो आन्दोलनलाई "जयतु संस्कृतम्" नामक संस्थाका रूपमा रूपान्तरित गरियो । संस्थामा रूपान्तरित भएपछि यसले प्राच्य भाषा, धर्म, संस्कृति तथा परम्परा एवं मूल्य र मान्यताको संरक्षण, संवर्द्धन र प्रचारलाई आफ्नो मुख्य अभियान बनाएको छ । आफ्नो अभियानको सफलताका लागि यस संस्थाले दीर्घकालिक एवं अल्पकालिक कार्ययोजनाहरू बनाई वार्षिक, अर्द्धवार्षिक र मासिक रूपमा कार्यक्रमहरू सञ्चालन गर्दै आएको छ । यस अतिरिक्त प्रकाशनसम्बन्धी कार्यहरू पनि यस संस्थाबाट भएका छन् । यस अन्तर्गत संस्थाको मुखपत्र प्रकाशन, दर्शनसम्बन्धी ग्रन्थहरूको अनुवाद एवं प्रकाशन, संस्कृतका विद्वान्हरूको उत्कृष्ट कृतिहरूको प्रकाशन भएका छन् । हालसम्म यस संस्थाबाट पन्ध्रवटा पुस्तकहरूको प्रकाशन भइसकेको छ । सोही क्रममा प्रस्तुत पुस्तक सोह्रौं कृतिका रूपमा प्रकाशित भएको छ ।

श्रीविद्या उपासना परम्पराका महान् आचार्य पुण्यानन्दद्वारा विरचित "कामकलाविलासः" नामक संस्कृत मूल कृतिमाथि प्रा. विद्यानाथ उपाध्याय भट्टले गर्नु भएको "श्रीविद्याप्रकाश" नामक नेपाली पद्यव्याख्या र सोही पद्यव्याख्यामाथि पुनः माधवप्रसाद लामिछानेले गर्नु भएको "गार्ग्यायणी" नामक नेपाली गद्यव्याख्या यस कृतिमा समेटिएको छ ।

नेपाली संस्कृतिमा श्रीविद्या उपासना परम्पराको गहिरो प्रभाव रहेको छ । भगवान् श्रीपशुपतिनाथको ऊर्ध्वमुखमा श्रीयन्त्रको निर्माण गरी श्रीयन्त्रकी अधिष्ठात्रीदेवी श्रीत्रिपुरसुन्दरीको नित्य पूजा गर्ने परम्परा रहनुले नेपाली समाजमा श्रीविद्या उपासनाको विशिष्ट महत्त्व र प्रभाव रहेको कुरा ज्ञात हुन आउँछ । अतः यस कृतिको प्रकाशनले नेपाली संस्कृतिको उक्त विशिष्ट पक्षमाथि थप गौरव सिर्जना हुने र नेपाली जनमानसमा यस ज्ञानको प्रचार हुने निश्चित छ । नेपाल संस्कृत विश्वविद्यालयको तन्त्र विषयको पाठ्यक्रममा समेत "कामकलाविलास" नामक ग्रन्थ समावेश गरिएकाले यस कृतिको प्रकाशनले विद्यार्थीवर्गका साथै शाक्तपरम्पराप्रति जिज्ञासु पाठकहरू समेत लाभान्वित हुने विश्वास लिइएको छ ।

धन्यवाद !

## विषयसूची



# उपोद्घात

## १. पृष्ठभूमि

विक्रमको सत्रौँ शताब्दीमा महेन्द्र मल्लका छोरा शिवसिंह मल्लको शासनकालमा दक्षिण भारतबाट द्रविड वंशका मूर्धन्य विद्वान् नारायण भट्टको काठमाडौँ उपत्यकामा प्रवेश भएको थियो । तिनै नारायण भट्टको कृपा र तन्त्रसिद्धिका कारण शिवसिंह मल्लले पाटन, दोलखा, सिन्धुली, लिस्ती, केरुङ्, मकवानपुर र पश्चिममा गण्डकीपारिसम्मको क्षेत्रलाई कान्तिपुरराज्यमा मिलाएका थिए । चापागाउँको अभिलेखमा नारायण भट्टको सौन्दर्य, विद्वत्ता र सिद्धिका विषयमा यसरी प्रकाश पारिएको छ–

**सत्कीर्तिः शरदिन्दुसुन्दररुचिर्मूर्तिः शिवस्याकृतिः ।**
**विद्या यस्य समस्तशास्त्रनिचयव्याख्यातिभूमिं गता ।**
**सिद्धिर्यस्य दिनेऽपि चन्द्रकरणे रात्रौ च सूर्योद्गमे,**
**सोऽयं सद्द्रविडान्वयोद्भवतनुः श्रीभट्टनारायणः ॥**
**येन श्रीशिवसिंहनामनृपतेर्नेपालदेशाखिला–**
**धीशत्वंपरिकल्प्यभूतिरखिलास्वस्यापिसम्पादिता ॥**

नारायण भट्टका छोरा महादेव भट्ट भए । महादेव भट्टका छोरा लक्ष्मीनारायण भट्ट अथवा लम्बकर्ण भट्ट नेपालको इतिहासमा र तन्त्रसम्बन्धी किंवदन्तीहरूमा चमत्कारी पुरुषका रूपमा प्रसिद्ध हुन पुगे । लम्बकर्ण भट्ट राजा प्रताप मल्लका गुरु थिए । यिनकै सहयोग र सल्लाहमा राजा प्रताप मल्लले फर्पिङ नजिक दक्षिणकाली र हनुमानढोकामा हनुमानको मूर्ति स्थापना गरेको र पशुपतिस्थित वासुकी मन्दिरको जीर्णोद्धार गरेको ऐतिहासिक प्रमाण पाइन्छ । यिनै लम्बकर्ण भट्टको वंशपरम्परामा कालान्तरमा तन्त्रविद्यानिष्णात महान् साधक विष्णुरमण भट्ट र तिनका पुत्र वासुदेव भट्ट भए । तिनै वासुदेव भट्ट र कर्मादेवीका सुपुत्रका रूपमा आफ्नो पुर्ख्यौली थलो नरदेवीमा जन्मनु भएका प्रा. विद्यानाथ उपाध्याय भट्ट तन्त्रशास्त्रका

विशिष्ट विद्वान् एवं साधक हुनुहुन्छ । आफ्ना पितामह विष्णुरमण भट्टबाट तन्त्रदीक्षा प्राप्त गरी तन्त्रसाधनाको विशिष्ट कुलपरम्परालाई आफ्नो गहन अध्ययन, अनुसन्धान र साधनाद्वारा अझ ज्योतिर्मय तुल्याउँदै आउनु भएका प्रा. विद्यानाथ उपाध्याय भट्टले तन्त्रशास्त्रका क्षेत्रमा "तन्त्रविद्यालोक", "अक्षमालातन्त्र"जस्ता मौलिक कृतिहरू प्रकाशित गरिसक्नु भएको छ। यसका साथै नवमीसिंह भण्डेलद्वारा विरचित "तन्त्रचिन्तामणि" नामक ग्रन्थको प्रथम भाग उहाँको सम्पादकत्वमा नेपाल संस्कृत विश्वविद्यालयबाट प्रकाशित भएको छ । यसै श्रृङ्खलामा श्रीविद्या साधनापरम्पराका महान् आचार्य पुण्यानन्दद्वारा विरचित "कामकलाविलास" नामक संस्कृत मूल ग्रन्थको कारिकामा निहित भावलाई नेपाली अनुष्टुप् छन्दमा अनुवाद गरी नेपाली जनमानसमा यस ज्ञानको प्रचार गर्ने उद्देश्यले प्रा. विद्यानाथ उपाध्याय भट्टले "श्रीविद्याप्रकाश" नामक व्याख्या तयार पार्नु भएको छ । त्रिपुरा सम्प्रदायको अमूल्य रचनाको रूपमा रहेको यस कृतिलाई "जयतु संस्कृतम्" नामक संस्थाले प्रकाशित गर्नु रोचक र उल्लेख्य विषय रहेको छ ।

## २. त्रिपुरा सम्प्रदायको परम्परा र साहित्य

### २.१. परम्परा

शक्तिलाई परम सत्ता मानेर शक्तिसाधनाका माध्यमबाट विश्वोत्तीर्ण– विश्वमय पराशक्तिका साथ एकाकार भई परिपूर्ण अहन्ताको बोध गर्नु र निरभिलाष एवं परिपूर्ण तृप्तस्वरूपमा प्राप्त हुनु नै शाक्त उपासनाको मूल लक्ष्य हो ।

हिन्दु शाक्त उपासनाका मूलतः दुईवटा धारा रहेका छन् — श्रीकुल र कालीकुल । श्रीकुल अन्तर्गत पराशक्तिको सौम्य र शान्त स्वरूपको प्रतिनिधिका रूपमा तदनुकूल साधनापद्धतिद्वारा त्रिपुरसुन्दरीको उपासना गरिन्छ भने कालीकुल अन्तर्गत पराशक्तिको रौद्र स्वरूपको प्रतिनिधिका रूपमा तदनुकूल उग्र एवं घोर साधनापद्धतिद्वारा कालीको उपासना गरिन्छ । यसैकारण त्रिपुरसुन्दरीको उपासना परम्परालाई पछिल्लो कालमा सौभाग्य सम्प्रदाय पनि भनिएको पाइन्छ जुन सम्प्रदाय सौम्य विधिका माध्यमबाट नै



साधनाको पक्षधर रहेको छ भने कालीपरम्परा अत्यन्त भयङ्कर र जटिल रहेको छ ।

त्रिपुरा सम्प्रदायको उत्पत्तिका विषयमा महार्थमञ्जरीकार महेश्वरानन्दका परम गुरु आचार्य शिवानन्दले नित्याषोडशिकार्णवको ऋजुविमर्शिनी नामक टीकामा यस सम्प्रदायको उत्पत्ति कश्मीरमा भएको मानेका छन्[1] । वामकेश्वरीमतविवरणमा जयरथले यस ग्रन्थलाई विरूप बनाउनेहरू र आफूलाई चर्यानन्दनाथका शिष्य मान्नेहरूको आलोचना गरेका छन् । यसबाट त्रिपुरा सम्प्रदायका प्रथम प्रवर्तक चर्यानन्दनाथ भएको स्पष्ट हुन्छ। डा. वासुदेवशरण अग्रवालले उड्डीयान पीठ कश्मीरमा रहेको बताएका छन् । आजभोलि स्वातका नामले प्रसिद्ध सुवास्तु नदी अफगानिस्तानको गान्धार प्रदेशमा बग्दछ । सुवास्तु नदीको घाँटी पहिले और्दायनी भन्ने नामले प्रसिद्ध थियो। त्यसैको अर्को नाम उड्डीयान पनि थियो। यसै क्षेत्रमा सर्वप्रथम चर्यानन्दनाथले त्रिपुरा सम्प्रदायको प्रवर्तन गरे होलान्। उक्त स्थान कश्मीरबाट नजिकै पर्दछ । यहीँबाट दीक्षा लिएर ईश्वरशिव कश्मीर आए होलान् । त्यसैले शिवानन्दले त्रिपुरा सम्प्रदायको उत्पत्ति कश्मीरमा भएको मान्नु उचितै ठहर्दछ। कश्मीरी विद्वान् जयरथले पनि ईश्वरशिव र विश्वावर्त नामका दुई जना आचार्यले सर्वप्रथम यस सम्प्रदायलाई कश्मीरमा ल्याएको मानेका छन्[२] । तन्त्रशास्त्रका आधुनिक विद्वान् व्रजवल्लभ द्विवेदी गुजरात र मध्यप्रदेशबाट यो सम्प्रदाय कश्मीरमा पुगेको र त्यहीँबाट दक्षिणमा फैलिएको मान्दछन्[३] । अभिनव गुप्तले श्रीतन्त्रालोकमा मध्यदेशबाट अत्रिगुप्त नामक विद्वान् ब्राह्मणलाई राजा ललितादित्यले कश्मीरमा ल्याएको वर्णन गरेका छन् । उनको वर्णनमा कश्मीरको शोभा, सिद्धिका लागि उक्त स्थानको सर्वोत्कृष्टता, शारदापीठको उल्लेख आदि पाइन्छ [४]। यदि मध्यदेशबाटै

---

१. सम्प्रदायस्य कश्मीरोद्भूतत्त्वात् ।
—नित्याषोडशिकार्णव, ऋजुविमर्शिनी टीका, पृ. ११४ ।

२. वस्तुतो ह्यस्य दर्शनस्यैतद्देवाचार्यद्वयं कश्मीरेष्ववतारकम् ।
— वामकेश्वरतन्त्र विवरण, योगिनीहृदय, उपोद्घात, पृ.१३ मा उद्धृत ।

३. योगिनीहृदय, उपोद्घात पृ. १३।

४. श्रीतन्त्रालोक, ३७ आह्निक, ३८–५२ श्लोक ।

आफ्ना पूर्वजहरूका साथमा त्रिपुरा उपासनापरम्परा कश्मीरमा आएको भए उनले त्यसको उल्लेख अवश्य गर्थे होलान् तर त्यस्तो वर्णन नपाइएकाले उक्त परम्परा कश्मीरकै उपज भएको र यहीँबाट अन्यत्र फैलिएको हुन सक्ने सम्भावना प्रबल देखिन्छ। त्रिपुरा सम्प्रदाय अन्तर्गत कश्मीर, केरल र गौड उपसम्प्रदायको विकास भएको छ र यसले समग्र भारतवर्षमा गहिरो प्रभाव पारेको देखिन्छ।

शक्तिसंगमतन्त्रमा सम्पूर्ण भारतवर्षलाई कादि र हादिको भेदले **५६** वटा देशमा बाँडिएको छ। जसअन्तर्गत मरुदेशदेखि नेपालसम्म कश्मीर सम्प्रदायको मान्यता रहेको छ। हादिमतका अनुसार कश्मीरमा त्रिपुराको र कादिमतका अनुसार ताराको उपासना गरिन्छ। यस सम्प्रदायमा शक्तिपातको तारतम्यले ऊर्ध्वाम्नायदीक्षा प्राप्त हुन्छ। यस सम्प्रदायका ऋक्कश्मीर, यजुःकश्मीर, सामकश्मीर र अथर्वकश्मीर गरी चार प्राथमिक भेद देखिन्छन् भने शिवकश्मीर, शक्तिकश्मीर र शिवशक्तिकश्मीरका शुद्ध, उग्र र गुप्त भेदले अन्य नौ प्रकार देखिन्छन्।

शक्तिसंगमतन्त्रका अनुसार अंगदेशदखि मालवदेशसम्म केरल सम्प्रदायको मान्यता रहेको छ। हादिमत अनुसार यस सम्प्रदायमा कालीको र कादिमत अनुसार त्रिपुराको उपासना गरिन्छ। केरल सम्प्रदायमा वेद अनुकूल दक्षिणाचारको प्रधानता रहेको छ त्यसैले यसलाई शुद्ध मार्ग पनि भनिन्छ। यस सम्प्रदायका ऋक्केरल, यजुःकेरल, सामकेरल र अथर्वकेरल गरी चार प्राथमिक भेद देखिन्छन् भने शिवकेरल, शक्तिकेरल र शिवशक्तिकेरलका शुद्ध, उग्र र गुप्त भेदले अन्य नौ प्रकार देखिन्छन्।

शक्तिसंगमतन्त्रका अनुसार सिलहट्टदेखि सिन्धुदेशसम्म गौड सम्प्रदायको मान्यता रहेको छ। हादिमत अनुसार गौड सम्प्रदायमा ताराको र कादिमत अनुसार कालीको उपासना गरिन्छ। गौड सम्प्रदाय मूलतः वाममार्गी मानिन्छ। यस सम्प्रदायका ऋग्गौड, यजुःगौड, सामगौड र अथर्वगौड गरी चार प्राथमिक भेद देखिन्छन् भने शिवगौड, शक्तिगौड र शिवशक्तिगौडका शुद्ध, उग्र र गुप्त भेदले अन्य नौ प्रकार देखिन्छन्।



कश्मीर सम्प्रदाय अन्तर्गत पर्ने नेपालमा पनि श्रीत्रिपुरसुन्दरीदेवीको उपासना गर्ने लामो परम्परा भेटिन्छ। भगवान् श्रीपशुपतिनाथको ऊर्ध्वमुखमा श्रीयन्त्र निर्माण गरी तान्त्रिक विधिले नित्य पूजा गर्ने परम्परा रहेको छ। यो परम्परा निकै प्राचीन मानिन्छ। नेपालमा श्रीविद्यापरम्परामा दीक्षित भई भगवती श्रीत्रिपुरसुन्दरीदेवीको पूजाउपासना र साधना गर्ने तान्त्रिक घरानाहरू भेटिन्छन्। नेपालमा विक्रमको **१४** औँ शताब्दीदेखिका भगवती श्रीत्रिपुरसुन्दरीदेवीका मूर्ति तथा मन्दिरहरू पाइएकाले नेपालमा त्रिपुरा उपासनापरम्परा लामो रहेको र यस परम्पराले नेपाली जनमानसमा गहिरो प्रभाव पारेको देखिन्छ। नेपालमा पाइएका श्रीत्रिपुरसुन्दरीदेवीका मन्दिरहरूमा दोलखाको करिब **१४** औँ शताब्दीको त्रिपुरसुन्दरी, काठमाडौँ पशुपतिमा अवस्थित करिब **१५** औँ शताब्दीको श्रीराजराजेश्वरी, डोल्पाको त्रिपुरसुन्दरी, गुल्मीको वामी टक्सारमा अवस्थित त्रिपुरसुन्दरीमाई आदि ज्यादै प्रसिद्ध छन्।

## २.२.साहित्य

तन्त्रशास्त्रका प्रसिद्ध विद्वान् निदरल्याण्डनिवासी डा. तून गौड्रियान तथा डा. संयुक्ता गुप्ताद्वारा प्रकाशित "हिन्दू तान्त्रिक एण्ड शाक्त लिटरेचर" नामक ग्रन्थमा श्रीकुल शीर्षक अन्तर्गत त्रिपुरा सम्प्रदायका ग्रन्थहरूको परिचय दिएको पाइन्छ। तीमध्ये उत्तरषट्क, त्रिपुरासारसमुच्चय, त्रिपुरार्णवतन्त्र, उदयाकरपद्धति, त्रिपुरसुन्दरीकल्पलता, अर्थरत्नावली, सङ्केतपद्धति, नित्याषोडशिकार्णव, योगिनीहृदय, महाज्ञानार्णव, हंसपारमेश्वर, स्वच्छन्दसङ्ग्रह, लघुस्तव, पञ्चस्तवी, प्रपञ्चसारतन्त्र, सुभगोदय, सुभगोदयवासना, सौभाग्यहृदयस्तोत्र, कुलार्णवतन्त्र, अम्बास्तव, परापञ्चाशिका, सौभाग्यसुधोदय, चिद्विलासस्तव, सौन्दर्यलहरी, वरिवस्यारहस्य, कामकलाविलास आदि उल्लेखनीय छन्। उपर्युल्लिखित ग्रन्थहरू कतिपय प्रकाशित भइसकेका छन् भने कतिपय ग्रन्थहरू प्रकाशनको पर्खाइमा पुस्तकालय तथा अभिलेखालयहरूमा रहेका छन् जसको वैदुष्यपूर्ण सम्पादन एवं प्रकाशन हुनु आवश्यक छ। यसै सन्दर्भमा आचार्य पुण्यानन्दद्वारा विरचित कामकलाविलासमा प्रतिपादित विषयवस्तुलाई यहाँ पाठक समक्ष सङ्क्षेपमा प्रस्तुत गर्ने अनुमति चाहन्छु।

## ३. कामकलाविलासको प्रतिपादित विषयवस्तु

तान्त्रिक सिद्धान्त एवं साधनाको इतिहासमा तान्त्रिक दर्शनका महान् आचार्य एवं दार्शनिक पुण्यानन्दद्वारा विरचित "कामकलाविलास" नामक ग्रन्थको विशिष्ट स्थान रहेको छ । उक्त ग्रन्थ श्रीविद्याविषयक साहित्यको उच्चकोटिको रचना हो । राजराजेश्वरी पराभट्टारिका महात्रिपुरसुन्दरीको उपासना नै यस ग्रन्थको मूल विषय हो । सम्पूर्ण विश्वप्रपञ्च, शिव एवं शक्ति अर्थात् प्रकाश एवं विमर्श तथा तिनको सामरस्यको बोधक श्रीचक्र र पञ्चदशी मन्त्रको यस ग्रन्थमा विशद व्याख्या एवं विवेचना गरिएको छ ।

वस्तुतः कामकलासिद्धान्त त्रिपुरा सम्प्रदायको मौलिक सिद्धान्त हो । विभिन्न ग्रन्थमा यस सिद्धान्तका अनगिन्ती व्याख्या पाइन्छन् । महाकालसंहिताको एउटा खण्डको नाम नै कामकलाखण्ड रहेको छ । विद्वत्समाजलाई के कुरा ज्ञात भएकै विषय हो भने मीमांसाका महान् आचार्य मण्डन मिश्रलाई शास्त्रार्थमा हार्न लागेको देखेर उनकी विदुषी पत्नी भारतीले शङ्कराचार्यलाई कामकलाविषयक प्रश्न गरेकी थिइन् । यसै कामकलाको स्वरूपको व्याख्या आचार्य पुण्यानन्दले कामकलाविलासमा गरेका छन् । प्रस्तुत ग्रन्थ श्रीविद्याको साधनाग्रन्थ हुँदाहुँदै पनि यसमा श्रीविद्याको मूल सिद्धान्तमाथि विशद रूपमा प्रकाश पारिएको छ । दार्शनिक दृष्टिले यो ग्रन्थ शाक्त परम्परामा तान्त्रिक अद्वयवादको प्रतिपादक रचना हो ।

अद्वैतवादी शैव तथा शाक्तदर्शनका अनुसार परमार्थतः न कुनै पदार्थको उत्पत्ति हुन्छ न त विनाश नै किनभने शिव एवं शक्तिका अतिरिक्त अन्य कसैको सत्ता नै छैन भने कसको उत्पत्ति र कसको विनाश हुने ? जसलाई प्रलय भनिन्छ वस्तुतः त्यो विनाश नभई कारणरूप आफ्नो स्वरूपमा प्रत्यावर्तन हो, शक्तिको सङ्कोच हो । माकुराले जालोलाई बाहिर ओकल्ने र पुनः भित्र निल्ने गरेझैँ परमात्मा शिवले पनि आफूभित्र अवस्थित विश्वलाई लीलावश अभिव्यक्त गर्ने र आफैँभित्र लय गर्ने कार्य गर्दछन् ।

अद्वैतवादी दार्शनिक परम्परामा केवलाद्वयवाद एवं द्वयात्मक अद्वयवाद दुवै अद्वैतवाद स्वीकार गरिएका छन् । शङ्कराचार्यको



केवलाद्वयवादमा ब्रह्म निष्क्रिय छ भने शैव तथा शाक्त तान्त्रिकहरूको द्वयात्मक अद्वयवादमा ब्रह्म सक्रिय छ । शाङ्करवेदान्तका अनुसार परमात्मा विश्वोत्तीर्ण, सच्चिदानन्द, अद्वैत, केवलरूप, सृष्टि-स्थिति-लयको कारण, भावाभावविहीन त छ परन्तु उसमा कर्तृत्व छैन । ब्रह्म ज्ञानस्वरूप त छ तर क्रियाशून्य छ । आगमिक वा तान्त्रिक अद्वैतवादमा भने ज्ञान र क्रिया परस्पर मिलेर रहेका छन् । ज्ञानकै स्थूल अभिव्यक्ति क्रिया हो भने क्रियाको सूक्ष्म पक्ष ज्ञान हो । स्वातन्त्र्यशक्तिसम्पन्न शिवमा ज्ञान एवं क्रिया अविरोध रूपमा रहेको छ । त्यसैले शिव सर्वज्ञत्व र सर्वकर्तृत्वले सम्पन्न छन् । शङ्कराचार्यको मतमा जगत्को सृष्टि, स्थिति आदिको कारण परब्रह्म नभई कार्यब्रह्म (ईश्वरनामधारी सगुण ब्रह्म) हो । कार्यब्रह्म जगत्को निमित्त कारण एवं उपादान कारण दुवै हो तर परब्रह्म जगत्को विवर्तोपादान हो । वेदान्त परिभाषाका अनुसार जगत्को कारण ब्रह्म नभई माया हो । वाचस्पति मिश्र तथा सर्वज्ञ मुनिका अनुसार ब्रह्म जगत्को कारणचाहिँ हो तर सृष्टि आदि कर्म ब्रह्मको स्वरूपलक्षण नभई तटस्थलक्षण हो जुन नित्य नभई अनित्य एवं औपाधिक हो । आगमिक अद्वैतवादमा भने सृष्टि, स्थिति, संहार, तिरोभाव र अनुग्रहस्वरूप पञ्चकृत्य ब्रह्मस्थानीय शिवबाटै सम्पन्न हुन्छ । शिव कर्ता हो भने शक्ति कारण हो[५] । आगमिक दृष्टिमा जगत् वस्तुतः परब्रह्मस्थानीय शिवको अभिन्न शक्तिको बहिस्फुरण मात्रै हो ।

शाक्त परम्परामा शिवलाई प्रकाश र शक्तिलाई विमर्श शब्दले सम्बोधन गरिएको पाइन्छ । विमर्श वस्तुतः प्रकाशरूप महेश्वरको महेश्वरताको पूर्ण प्रतीति हो । विमर्श शक्ति कुनै आगन्तुक तत्त्व नभई शिवमा पराशक्तिका रूपमा विद्यमान नित्य, चिन्मय तत्त्व हो जसका माध्यमबाट प्रकाशरूप शिवले सृष्टि-स्थिति-संहार-निग्रह-अनुग्रहरूप पञ्चकृत्यको सम्पादन गर्दछन् । ब्रह्मा-विष्णु-महेश्वररूपिणी पराशक्ति त्रिपुरा नै ज्ञानशक्ति, इच्छाशक्ति एवं

---

५. सृष्टिं स्थितिं च संहारं तिरोभावमनुग्रहम् ।
शिवः करोति सततं सर्वकारणकारणम् ॥
शिवः सर्वस्य कर्तेयं शक्तिः कारणमिष्यते ।
—स्वच्छन्दसंग्रह, योगिनीहृदय (दीपिका), पृ. ४९ मा उद्धृत ।

क्रियाशक्तिको समष्टिस्वरूप विमर्शशक्ति हुन्[६] । तिनै त्रिपुरादेवीमा शिवदेखि पृथ्वीसम्मका समस्त **३६** तत्त्व निहित छन् । अनन्त विश्वका रूपमा तिनै त्रिपुरा शक्ति रहेकी छिन् । वास्तवमा त्रिपुरा शक्ति विश्वमय–विश्वोत्तीर्ण, साकार–निराकार तथा व्यक्त–अव्यक्त स्वरूपकी छिन् । तिनै त्रिपुरा समस्त प्राणीहरूको उत्पादक तथा परब्रह्मको सिसृक्षा शक्ति हुन् । परमेश्वरको मानसमा सिसृक्षाको भाव उठ्ने बित्तिकै उनका दुईवटा रूप बन्न पुग्छन् — १. शिव र २.शक्ति । शिव प्रकाशरूप छन् भने शक्ति विमर्शरूप । विमर्श सृष्टिकालमा विश्वाकार रूपमा, स्थितिकालमा विश्वप्रकाशनको रूपमा र संहारकालमा विश्वसंहारका रूपमा रहन्छ । विमर्शका माध्यमबाट नै प्रकाशको अनुभव हुन्छ र प्रकाशको स्थितिमा विमर्शको कल्पना सार्थक हुन्छ । जसरी ऐनाबिना अनुहारको दर्शन सम्भव हुँदैन त्यसरी नै विमर्शबिना प्रकाशको स्वरूपज्ञान सम्पन्न हुँदैन । शक्तिबिना शिवलाई आफ्नो प्रकाशरूपताको ज्ञान हुँदैन । शिवमा चेतनाको ज्ञान शक्तिका माध्यमबाट हुन्छ । त्यसैले शक्तिशून्य शिव शवसमान हुन्छ । शक्तिले युक्त हुँदा नै शिवलाई शक्तिमान् भनिन्छ अन्यथा शक्तिबिना शिवमा स्पन्दन पनि रहँदैन[७] । आफूमा अन्तर्लीन आत्मशक्तिलाई देखेर नै शिवलाई आफ्नो परिपूर्ण स्वरूपको बोध हुन्छ । शिव एक्लैबाट वा शक्ति एक्लैबाट सृष्टिको प्रक्रिया सम्भव हुँदैन । परा शक्ति र परम शिवको संयुक्त अवस्थाबाट मात्र सृष्टिको प्रक्रिया सम्भव हुन्छ । यदि पराशक्ति परम शिवका साथ संयुक्त अवस्थामा नरहने हो भने आफूभित्र बीजका रूपमा अवस्थित चराचर जगत्लाई पराशक्ति एक्लैले उत्पन्न गर्न सक्दिनन् । सृष्टिका लागि यामलभाव आवश्यक हुन्छ । वास्तवमा प्रकाश तथा विमर्श भनाइका लागि भिन्न भए तापनि यी दुवै अभिन्न छन्[८] । जसरी आगोबाट त्यसको पोल्ने शक्ति कहिल्यै अलग हुन

६. एषा सा परमाशक्तिरेकैव परमेश्वरी ।
त्रिपुरा त्रिविधा देवी ब्रह्मविष्णवीशरूपिणी ॥

—नित्याषोडशिकार्णव, ४।११

७. शिवःशक्त्या युक्तो यदि भवति शक्तः प्रभवितुम् ।
न चेदेवं देवो न खलु कुशलः स्पन्दितुमपि ॥

—सौन्दर्यलहरी, १ श्लोक ।

८. प्रकाशमानं न पृथक् प्रकाशात्



सक्दैन त्यसरी नै विमर्शरूप शक्ति पनि प्रकाशरूप शिवबाट कहिल्यै अलग हुन सक्दैन । वास्तवमा शक्तिका माध्यमबाट नै शक्तिमान् परम शिवको बोध हुन्छ [९] । परम शिवको शक्तिस्वरूप विमर्शको स्फुरण नै नामरूपात्मक विश्ववैचित्र्य हो । परमेश्वरको शक्तिको स्फुरण भएकाले विचित्र विश्वका रूपमा दृष्टिगोचर हुने सम्पूर्ण पदार्थ प्रकाशरूप नै हो त्यसैले वस्तुतः संसार परमेश्वरदेखि भिन्न छैन । अतः तान्त्रिक दृष्टिमा जगत् यथार्थरूप छ ।

निष्कल तत्त्वातीत परम शिव नै विश्वको मूल केन्द्रमा उत्तीर्ण रूपमा विद्यमान छ । विश्वविकासका प्रति उसको उन्मुखता वा स्फुरत्ता नै प्रकाशस्वभाव परम शिवको रश्मिपुञ्जबाट निर्मित निर्मल विमर्शात्मक दर्पण हो । यसै विमर्शमय दर्पणमा प्रतिबिम्बित परम शिवलाई सर्वप्रथम परिपूर्ण 'अहं' को बोध हुन्छ । यो 'अहं' नै अकारादि वर्णरूप वाचक एवं पदार्थरूप वाच्यले युक्त विश्वविकासको प्रथम सोपान हो । **३६** तत्त्वले युक्त समस्त भुवनमण्डललाई मयूररसन्यायले आफूभित्र समेटेर रहेको 'अहं' (पूर्णाहन्ता) लाई शिवशक्तिरूप दिव्यदम्पत्तिको सामरस्यस्वरूप मानिन्छ । 'अहं' ले आफूभित्र प्रत्याहारन्यायले ५० वर्णहरूलाई समेटेर रहेको छ । 'अहं' को अकार अनुत्तरवाचक शिवको सङ्केत हो भने हकार विमर्शवाचक शक्तिको सङ्केत हो । यसै अहन्तारूप महाबिन्दुमा 'शुक्ल' 'रक्त' एवं 'मिश्र' नामक तीनवटा बिन्दु रहेका छन् । प्रकाश शुक्लबिन्दु हो भने विमर्श रक्तबिन्दु हो तथा दुवैको समरसभाव मिश्रबिन्दु हो जसलाई सूर्यस्वरूप काम पनि भनिन्छ । त्यसैले प्रकाशस्वरूप शुक्लबिन्दु एवं विमर्शस्वरूप रक्तबिन्दु सूर्यस्वरूप कामका अग्नि र सोमस्वरूप कला हुन् । अतः अग्नि र सोमस्वरूप कला र ती दुवैको समरसभाव 'काम' को समष्टिबिन्दुलाई नै कामकला वा त्रिपुरसुन्दरी भनिन्छ ।

स च प्रकाशो न पृथक् विमर्शात् ।
नान्यो विमर्शोऽहमिति स्वरूपात्
अहंविमर्शोऽस्ति चिदेकरूपः ॥

— उच्छुष्मभैरव, विज्ञानभैरव पृ. १४९ मा उद्धृत ।

९. न वह्नेर्दाहिका शक्तिर्व्यतिरिक्ता विभाव्यते ।
केवलं ज्ञानसत्तायां प्रारम्भोऽयं प्रवेशने ॥

— विज्ञानभैरव, १९ श्लोक ।

कामतत्त्वका बारेमा तान्त्रिक धारणा के देखिन्छ भने अकाररूप प्रकाश (शिव) का साथ हकाररूप विमर्श (शक्ति) को अर्थात् अग्निका साथ सोमको साम्यभाव नै काम या रवि हो । त्यसैलाई अग्नि र सोमको समष्टिस्वरूप कामबिन्दु भनिन्छ । सृष्टि एउटै महाशक्तिको दुईवटा विरुद्ध स्वरूपको महाक्रीडा हो जो परस्पर विषमभाव ग्रहण गरेर परस्पर एकअर्कामाथि क्रिया गर्दै सम्पन्न हुन्छ । ती दुई परस्पर विरोधी शक्ति हुन्–अग्नि तथा सोम । अग्नि तापमय, दुःखप्रद, मृत्युस्वरूप तथा अविभक्तलाई विभक्त गरेर प्रकाशित गर्ने प्रकाशरूप संहारात्मक तत्त्व हो भने सोम शीतल, सुखप्रद, अमृतस्वरूप तथा विभक्तलाई अविभक्त गरेर प्रकाशित गर्ने विमर्शस्वरूप सृष्ट्यात्मक तत्त्व हो ।

इच्छा, ज्ञान र क्रियाको समुदित रूप एवं इच्छात्मक पश्यन्ती मातृका, ज्ञानात्मक मध्यमा मातृका र क्रियात्मक वैखरी मातृकालाई आफूभित्र समेटेर रहेको पूर्णाहन्तास्वरूप परामातृका नै कामकला वा श्रीत्रिपुरसुन्दरीको मातृका स्वरूप हो । ब्रह्माण्डको त्रिपुरसुन्दरी वा परामातृका नै पिण्ड शरीरको कुण्डलिनी शक्ति हो । 'कामकला' त्रिपुरसुन्दरीदेवी हुन् भने कामकलाविद्या त्रिपुरसुन्दरीको स्वरूप हो । सोही कामकलाविद्याद्वारा साधकलाई त्रिपुरसुन्दरीदेवीको विग्रहस्वरूप श्रीचक्रको दिव्यस्वरूपको ज्ञान हुन्छ र उक्त ज्ञानका माध्यमबाट साधकले महात्रिपुरसुन्दरीका साथ तादात्म्य, ऐकात्म्य एवं तद्रूपता प्राप्त गरी मुक्त हुन्छ ।

शाक्तदर्शनका अनुसार सृष्टि परिवर्तनरहित, स्थिर एवं नित्य संवित् तत्त्वभित्र परिवर्तन, गति, अस्थिरता एवं विभिन्न रूपान्तरण तथा नामरूपात्मक रचनाको आनन्दात्मक अभिनय, कलाविलास वा आत्मप्रकाशन हो । आत्मरति, आत्मक्रीडा, आत्ममिथुन एवं आत्मानन्दको 'एकोऽहं बहु स्याम' अर्थात् 'एउटै म धेरै बनूँ' भन्ने कामना नै सृष्टिको मूल बीज हो ।

परमात्मतत्त्व न नारी हो न नर । शुद्ध चैतन्य परमात्मतत्त्व लिङ्गातीत छ तर विश्वाभिनयको उद्देश्यले उक्त तत्त्व मातापिताका रूपमा अर्थात् कामेश्वर तथा कामेश्वरीका रूपमा प्रस्तुत हुन्छ । एउटै परमतत्त्व शिवशक्ति, पतिपत्नी, मातापिता, गुरुशिष्य तथा अहं–इदंको युगलरूपमा



आविर्भूत हुन्छ । उसको सिसृक्षा 'काम' नै जगत्का रूपमा आभासित हुन्छ । त्यसैले काम नै विश्वसृष्टिको मूल कारण हो । सोही कामले युक्त शिव एवं शक्ति कामेश्वर तथा कामेश्वरीका नामले चिनिन्छन् । तिनै कामेश्वर तथा कामेश्वरीको सामरस्यको परिणामस्वरूप नै जगत्को आविर्भाव हुन्छ । अनन्त सृष्टिको महाविकासको रेखात्मक प्रतीक श्रीचक्र कामेश्वर तथा कामेश्वरीको सामरस्यको बोधक यन्त्र हो ।

ऊर्ध्वमुख त्रिकोणले युक्त चारवटा शिवचक्र र अधोमुख त्रिकोणले युक्त पाँचवटा शक्तिचक्रको मिलनबाट बनेको नवयोन्यात्मक श्रीचक्र पिण्ड एवं ब्रह्माण्डीय समस्त शक्तिको मूल आश्रय हो । श्रीचक्रमा रहेको चतुर्दशार, बहिर्दशार, अन्तर्दशार, अष्टार एवं त्रिकोण गरी पाँचवटा चक्र शक्तिका प्रतीक हुन् भने बिन्दु, अष्टदल, षोडशदल एवं भूपुर गरी चारवटा चक्र शिवका प्रतीक हुन् । भगवती महात्रिपुरसुन्दरीको पञ्चदशाक्षरी मन्त्र पनि यसै यन्त्रमा निहित छ । पञ्चदशाक्षरी मन्त्रका तीन ककार एवं दुई हकार शिवका वाचक हुन् भने बाँकी अक्षरहरू शक्तिका वाचक हुन् । ह्रीँकारले शिव र शक्ति दुवैलाई बुझाउँछ । यसप्रकार उक्त मन्त्र पनि शिवशक्तिको सामरस्यको बोधक रहेको छ ।

श्रीचक्रमा रहेको बिन्दु विश्वविकासको मूल हो । उक्त बिन्दु प्रकाशस्वरूप शिव र विमर्शस्वरूप शक्तिको सामरस्यमय कामबिन्दु हो । सो कामबिन्दु पछि त्यसैको विस्तारबाट प्रकट हुनेवाला वामा, ज्येष्ठा र रौद्रीस्वरूप त्रिकोणचक्रको एकीभूत स्वरूप भएकाले त्यसलाई अम्बिकास्वरूप मानिन्छ । शिव र शक्तिको सामरस्यस्वरूप महाबिन्दुमय मध्यचक्रबाट नै त्रिकोण चक्रको उत्पत्ति हुने भएकाले त्रिकोणचक्रलाई पनि अम्बिकास्वरूप मानिएको हो । यही त्रिकोण चक्रले नै अन्ततः नौवटा चक्रहरूको रूप धारणा गर्दछ र त्रिपुरा आदि नौ चक्रेश्वरी देवी र उनका करशुद्धि आदि नौवटा मन्त्रहरूसँग संयुक्त बन्दछ । यही त्रिकोणचक्र जब अष्टकोण (नवयोनिचक्र) को बीचमा रहन्छ तब **१६** वटा स्वरहरूले घेरिएर रहन्छ । यसै अष्टकोणको बीचमा रहेको अम्बिका र शान्ता शक्तिको सामरस्यस्वरूप महाबिन्दुमय सदाशिवरूपी आसनमा प्रकाश एवं विमर्शस्वरूप कामेश्वर तथा कामेश्वरीको युगल स्वरूपको निवास रहेको छ । अष्टकोणचक्र र

त्रिकोणचक्रको बीचमा रहेको महाबिन्दुको प्रभाबाट दुईवटा दशारचक्रको निष्पत्ति हुन्छ । साधनाका क्रममा प्रथम दशार (अन्तर्दशार) चक्रमा टवर्ग एवं तवर्गका दश वर्णहरू एवं पञ्चमहाभूत तथा पञ्चतन्मात्राको विन्यास गर्नुपर्छ । स्वच्छन्दसङ्ग्रह आदि ग्रन्थमा य,र,ल,व,श,ष,स,ह,ळ, क्ष गरी दश वर्णहरूको गणना गर्दै तिनलाई अग्निका दशकला मानिएको छ[१०] । पृथिवी, जल, तेज, वायु र आकाश यी पञ्चमहाभूत एवं गन्ध, रस, रूप, स्पर्श, शब्द यी पञ्चतन्मात्रा शिवस्वरूप तथा यकारदेखि क्षकारसम्मका दश वर्णहरू शक्तिस्वरूप रहेका छन् । द्वितीय दशार (वहिर्दशार) चक्रमा चाहिँ ककार आदि दश वर्णहरू तथा दश इन्द्रिय (पञ्च कर्मेन्द्रिय एवं पञ्च ज्ञानेन्द्रिय) का शब्द आदि दश विषयहरूको विन्यास गर्नुपर्छ । त्यसैले दुवै दशार चक्रहरू तत्त्वात्मक शिवतत्त्व र वर्णात्मक शक्तितत्त्वको प्रकाशले घेरिएर प्रकाशविमर्शमय बनेका छन् ।

बैन्दव चक्र, त्रिकोणचक्र, अष्टकोणचक्र र अन्तर्दशारचक्रका चार प्रभाहरू र बहिर्दशारचक्रका दश अवयवहरू मिलेर चतुर्दशारचक्रको निष्पत्ति हुन्छ । ज्ञानशक्ति र क्रियाशक्तिको स्फुरणबाट आविर्भाव भएको यो चतुर्दशारचक्र पञ्च ज्ञानेन्द्रिय, पञ्च कर्मेन्द्रिय र चारवटा अन्तःकरणले युक्त छ । बैन्दवचक्रको मध्यमा रहेको विमर्शशक्ति नै त्रिकोण, अष्टकोण, अन्तर्दशार र बहिर्दशारको क्रमले श्रोत्र आदि पञ्च ज्ञानेन्द्रिय, वाक् आदि पञ्च कर्मेन्द्रिय तथा मन, बुद्धि, अहङ्कार र चित्तस्वरूप अन्तःकरणचतुष्टय गरी १४ तत्त्व एवं टकारदेखि लिएर भकारसम्मका १४ वटा वर्णका रूपमा परिणत हुन्छ । यसप्रकार प्रकाशविमर्शमय तत्त्वात्मक तथा वर्णात्मक चतुर्दशारचक्र निष्पन्न हुन्छ ।

माथि वर्णन गरिएका पाँच शक्तिचक्र र चार वह्निचक्र (शिवचक्र) को स्फुरणबाट निष्पन्न ४२ योनिमय चक्रसमूह रौद्री शक्तिको विस्तार हो भने तीन भूपुर ज्येष्ठा शक्तिको तथा वृत्तत्रय वामाशक्तिको विस्तार हो । श्रीचक्रको बिन्दु र त्रिकोण चित्कलामय, अष्टकोण शान्त्यतीतकलामय, अन्तर्दशार, बहिर्दशार एवं चतुर्दशार शान्तिकलामय, अष्टदल विद्याकलामय, षोडशदल प्रतिष्ठाकलामय र भूपुर (चतुरस्रचक्र) निवृत्तिकलाको विलास हो ।

बिन्दुबाट प्रारम्भ भई भूपुरमा समाप्त हुने श्रीचक्रको क्रमलाई सृष्टिक्रम भनिन्छ भने भूपुरबाट प्रारम्भ भई बिन्दुमा समाप्त हुने क्रमलाई संहारक्रम भनिन्छ । यी दुवै क्रमबाट श्रीचक्रको भावना र पूजा गरिन्छ । संहारक्रमबाट त्रैलोक्यमोहन (भूपुर) आदि नौवटा चक्रमा क्रमशः नाद, बिन्दु, कला, ज्येष्ठा, रौद्री, वामा, विषघ्नी, दूतरी र सर्वानन्दा नामक नौ वटा शक्तिहरू रहेका छन् । तिनमा नाद र बिन्दु शान्ताशक्तिमय अर्थात् भूपुर (चतुरस्रचक्र) र षोडशदल शान्ताशक्तिमय, कलास्वरूप अष्टदल इच्छाशक्तिमय, ज्येष्ठास्वरूप चतुर्दशार ज्ञानशक्तिमय तथा रौद्री आदि पाँच शक्तिले क्रमशः युक्त बहिर्दशार, अन्तर्दशार, अष्टकोण, त्रिकोण र बैन्दवचक्र क्रियाशक्तिमय छन् । परमार्थतः सम्पूर्ण श्रीचक्र कामकलाको नै विलास हो । श्रीचक्रमा रहेका नौवटा चक्रको क्रमशः अकुल, विषु, वह्नि, शाक्त, नाभि, अनाहत, विशुद्धि, लम्बिकाग्र र भ्रूमध्यमा सकल भावना; बिन्दु, अर्धचन्द्र, रोधिनी, नाद, नादान्त, शक्ति, व्यापिका, समना र उन्मनामा सकलनिष्कल भावना तथा महाबिन्दुमा निष्कल भावना गरी त्रिविध भावना गरिन्छ ।

विश्वोत्तीर्ण तत्त्व जब विश्वमय बन्न चाहन्छ तब उसमा विश्वका रूपमा उल्लसित हुने स्फुरण उद्भासित हुन्छ । आगोको सम्पर्कबाट जसरी घिउ पग्लिन थाल्छ त्यसरी नै प्रकाशको सम्पर्कबाट विमर्शशक्तिमा स्पन्दन देखापर्छ र सोही स्पन्दनबाट बैन्दवचक्र प्रकट हुन्छ । त्यस समयमा विमर्शशक्तिरूप परमा कलाले सर्वप्रथम शान्ता र अम्बिका शक्तिको रूप धारण गर्दछ । त्यसैलाई परावाक् पनि भनिन्छ । यही परावाक् आफूमा बीजरूपमा अवस्थित विश्वलाई जब बाहिर प्रकट गर्न चाहन्छ तब विश्वलाई वमन गर्ने भएकाले अङ्कुशाकार वामाशक्तिको रूपधारण गर्दछ । यही वामाशक्ति नै इच्छाशक्तिका साथ संयुक्त भएर पश्यन्तीवाक्का रूपमा परिणत हुन्छ । त्यसैगरी ज्येष्ठाशक्ति र ज्ञानशक्ति संयुक्त हुँदा मध्यमावाक् तथा रौद्रीशक्ति र क्रियाशक्तिको मिलनबाट वैखरी वाणीको आविर्भाव हुन्छ । प्रकाशको अंशबाट आविर्भूत अम्बिका, वामा, ज्येष्ठा र रौद्रीशक्ति तथा विमर्शको अंशबाट आविर्भूत शान्ता, पश्यन्ती, मध्यमा र वैखरी

---

[१०] यादिक्षान्तानि वर्णानि कला वह्नेर्महेश्वरि ।
— स्वच्छन्दसङ्ग्रह, योगिनीहृदय (दीपिका), पृ. २८७ मा उद्धृत ।

वाक्शक्तिमा नै सम्पूर्ण नामरूपात्मक जगत् बीजमा वृक्ष रहेझैँ रहेको छ। यिनै शक्तिबाट कामरूप, पूर्णगिरि, जालन्धर र ओड्याण नामक पीठको उदय हुन्छ। यी पीठहरू मानवशरीरमा क्रमशः कन्द (मूलाधार) पद (हृदय), रूप (भ्रूमध्य) तथा रूपातीत (ब्रह्मरन्ध्र) मा रहेका छन्। यी पीठहरू क्रमशः चतुरस्र, षड्बिन्दुमय, अर्धचन्द्र र त्रिकोणाकार छन्। यी पीठहरूमा क्रमशः स्वयम्भू, बाण, इतर र पर लिङ्ग रहेका छन्। स्वयम्भूलिङ्ग पीत वर्णको छ तथा अकार आदि सोह्र स्वरहरूले घेरिएको छ भने बाणलिङ्ग धूम्र वर्णको छ तथा ककारदेखि तकारसम्मका सोह्र व्यञ्जनले घेरिएको छ । इतरलिङ्ग श्वेत वर्णको छ तथा थकारदेखि शकारसम्मका सोह्र व्यञ्जनले घेरिएको छ भने परलिङ्ग रक्त वर्णको छ तथा अकारदेखि क्षकारसम्मका समस्त वर्णहरूले घेरिएको छ।

बिन्दुसहित त्रिकोणमा अवस्थित प्रकाशको अंशबाट आविर्भूत अम्बिका आदि चार शक्तिहरू, विमर्शको अंशबाट आविर्भूत शान्ता (परा) आदि चार वाणीहरू, कामरूप आदि चार पीठहरू, स्वयम्भू आदि चार लिङ्गहरू श्रीविद्याका वाग्भवबीज, कामराजबीज र शक्तिबीज तथा तिनको समष्टिस्वरूप तुरीय विद्याका वाच्यरूप हुन्।

सम्पूर्ण प्राणीहरूमा चेतनाका रूपमा भासमान विश्वोत्तीर्ण प्रकाशस्वरूप अनुत्तर परमतत्त्व आफ्नो स्वातन्त्र्यशक्तिका माध्यमबाट विश्वमय बन्छ। जगत्सृष्टिरूप क्रीडामा उद्युक्त हुने इच्छा उदय हुँदा उक्त परमतत्त्व प्रमेय, प्रमाता, र प्रमाणका रूपमा विभक्त भई इच्छा, ज्ञान एवं क्रियास्वरूप त्रिकोणको स्वरूप धारण गर्दछ। परमतत्त्वको अभिन्न विमर्शशक्ति नै विश्वका रूपमा आकारित हुन्छ। प्रकाशस्वरूप कामेश्वर तथा विमर्शस्वरूप कामेश्वरी इच्छाशक्तिमय पाश, ज्ञानशक्तिमय अङ्कुश र क्रियाशक्तिमय धनुषबाणलाई धारण गर्दा कमनीय स्वरूपवाला बन्न पुग्छन्। कामेश्वर तथा कामेश्वरीको यो युगलस्वरूप आश्रय र आश्रयीको भेदले आठ आयुधवाला बन्छ। यही युगलस्वरूप नै बैन्दव, त्रिकोण, वसुकोण आदि क्रमले विविध रूपमा आफ्नो विस्तार गर्दै नवचक्रात्मक श्रीचक्ररूपी शरीरमा आफ्ना अवयवरूपी शक्तिका साथ अवतरित हुन्छ र यसरी विश्वोत्तीर्णतालाई परित्याग गरी विश्वमय बन्न पुग्छ। यहाँ प्रकाशस्वरूप कामेश्वर समुद्रस्थानीय, विमर्शस्वरूप कामेश्वरी जलस्थानीय र तिनका अवयव शक्तिहरू तरङ्गस्थानीय हुन्। जसरी समुद्रको जलबाट उठेका लहरहरू उसैमा विलीन हुन्छन् त्यसरी नै यो सम्पूर्ण विश्वमय शक्तिचक्र यसै युगलस्वरूपबाट उदाउँछ र यसैमा अस्ताउँछ।



चितिशक्ति जब विश्वरचनाका लागि आफूलाई सम्पूर्णतया रूपान्तरण गर्ने पूर्ण विचिकीर्षाले सम्पन्न भई प्रकाश र विमर्शका रूपमा आफूलाई विभक्त गर्छ तब उसको क्रियाशक्ति विश्वको मोदन (अनुकूल कार्यसम्पादन) र द्रावण (अनुकूल कार्यसम्पादनमा तन्मयता) व्यापारमा प्रवृत्त भई मुद्राको स्वरूप धारण गर्दछ। मुद्रा शब्द तन्त्रशास्त्रमा अनेकौँ अर्थमा प्रयोग भएको पाइन्छ। तर यहाँ दुई हातका औँलाहरूको संयोगबाट बन्ने मुद्रालाई ग्रहण गरिएको छ। दाहिने हातका औँलाहरू प्रकाशस्वरूप तथा बायाँ हातका औँलाहरू विमर्शस्वरूप मानिन्छ। यस प्रकार विश्वमय पराशक्तिको ज्ञानशक्तिबाट श्रीचक्र र क्रियाशक्तिबाट मुद्राहरूको आविर्भाव हुन्छ। श्रीतन्त्रालोकमा मुद्राका चार प्रकार बताइएको छ।–१. करजा २. कायिकी (सर्वावस्थास्वेकरूपा) ३. विलापाख्या (मन्त्रतन्मयतारूपा) ४. मानसी (ध्येयतन्मयतारूपा)। नित्याषोडशिकार्णवमा दशवटा मुद्राहरू बताइएको छ जसमध्ये त्रिखण्डा मुद्राको प्रयोग आवाहनका लागि गरिन्छ भने अन्य नौ वटा मुद्राहरू त्रैलोक्यमोहन आदि नौवटा चक्रहरूको पूजाका क्रममा प्रत्येक चक्रको बीजोच्चारणपूर्वक प्रदर्शन गरिन्छ।

तान्त्रिक साधनामा गुरुको अत्यन्त ठूलो महत्त्व रहेको छ। त्यसैले गुरुलाई शिव नै भनिएको छ[११]। गुरुलाई आध्यात्मिक विकास एवं सिद्धिको एक मात्र उपाय बताइएको छ। स्वयं परम शिवले आफ्नै इच्छावश आफूलाई कामेश्वर एवं कामेश्वरीका रूपमा विभाजित गरे। बृहदारण्यकोपनिषद्मा भनिएको छ– परमात्माले आफ्नो आत्मालाई दुई भागमा विभक्त गरेर पति एवं पत्नी बने[१२]। स्वच्छन्दतन्त्रमा भनिएको छ – शिव स्वयंले नै गुरुशिष्यका

[११] यो गुरुः स शिवः प्रोक्तो यः शिवः स गुरुः स्वयम्।
उभयोरन्तरं नास्तिगुरोरपि शिवस्य च॥

[१२] स इममेवात्मानं द्विधा पातयत्। ततः पतिश्च पत्नी चाभवताम्।
–बृहदारण्यकोपनिषद्।

रूपमा आफूलाई रूपान्तरण गरेर प्रश्नोत्तररूपी वाक्यका माध्यमबाट तन्त्रको आविर्भाव गरे[१३] । यसरी गुरुपरम्पराको प्रादुर्भाव भयो । यो परम्परा तीन प्रकारको रहेको छ —१.दिव्यौघ, २. सिद्धौघ र ३. मानवौघ ।

त्रिपुरा परम्पराका अनुसार त्रिकोणचक्रको मध्यबिन्दुमा अवस्थित ओड्याणपीठमा चर्यानन्दनाथका नामले सत्ययुगमा स्वयं परमशिवले नै आफूदेखि अभिन्न महात्रिपुरसुन्दरीदेवीलाई श्रीविद्याको उपदेश गरे । त्रिकोणचक्रको ऊर्ध्वबिन्दुमा अवस्थित कामरूपपीठमा ऊर्ध्वदेवनाथका नामले त्रेतायुगमा स्वयं परमशिवले नै आफूदेखि अभिन्न वाग्भवबीजकी अधिष्ठातृ कामेश्वरीलाई श्रीविद्याको उपदेश गरे । त्रिकोणचक्रको दक्षिणबिन्दुमा अवस्थित जालन्धरपीठमा षष्ठदेवनाथका नामले द्वापरयुगमा स्वयं परमशिवले नै आफूदेखि अभिन्न कामराजबीजकी अधिष्ठातृ वज्रेश्वरीलाई श्रीविद्याको उपदेश गरे । त्यसैगरी त्रिकोणचक्रको उत्तरबिन्दुमा अवस्थित पूर्णगिरिपीठमा मित्रदेवनाथका नामले कलियुगमा स्वयं परमशिवले नै आफूदेखि अभिन्न शक्तिबीजकी अधिष्ठातृ भगमालिनीलाई श्रीविद्याको उपदेश गरे । कलियुगको प्रारम्भमा मित्रदेवनाथले लोपामुद्रा एवं महर्षि अगस्त्यलाई श्रीविद्याको उपदेश गरे । यसैलाई दिव्यौघ भनिन्छ । सिद्धौघ अन्तर्गत कङ्कालतापस, धर्माचार्य, मुक्तकेशिनी र दीपकाचार्य गरी गुरुचतुष्टय रहेका छन् भने मानवौघ अन्तर्गत जिष्णुदेव, मातृगुप्तदेव, तेजोदेव, मनोजदेव, कल्याणदेव, रत्नदेव र वासुदेव गरी गुरुसप्तक रहेका छन् ।

श्रीविद्या उपासना मूलतः तीन प्रकारको रहेको छ– १. बहिर्याग, २. मिश्रयाग र ३. अन्तर्याग । सुवर्ण, रजत, ताम्र, स्फटिक, शालिग्राम आदिमा निर्मित श्रीचक्रमा वाह्योपचारद्वारा भगवती श्रीत्रिपुरसुन्दरीको पूजा गर्नु वहिर्याग हो । वाह्योपचारका साथै भावनाले सहित भई आन्तर उपासना पनि गर्नु मिश्रयाग हो । यसमा पञ्चमकारको पनि प्रयोग गरिन्छ । आफ्नो शरीरलाई श्रीचक्र मानेर त्यसमा भगवती श्रीत्रिपुरसुन्दरीको उपासना

---

[१३] गुरुशिष्यपदे स्थित्वा स्वयमेव सदाशिवः
प्रश्नोत्तरपदैर्वाक्यैस्तन्त्रं समवतारयत् ॥
–स्वच्छन्दतन्त्र, ८।३१, योगिनीहृदय (दीपिकाटीका), पृ.४ मा उद्धृत ।



गर्नु अन्तर्याग हो । कुण्डलिनी जागरणपछि नै अन्तर्यागको अधिकार प्राप्त हुन्छ । यो वाह्योपचारनिरपेक्ष उपासना हो । अन्तर्यागमा कुण्डलिनीशक्तिलाई मूलाधारबाट जगाएर शरीरमा रहेका चक्रहरूको भेदन गर्दै ब्रह्मरन्ध्रस्थित सहस्रारचक्रमा आसीन परमशिवमा लय गरिन्छ । शक्तिलाई शक्तिमान्मा लय गराउनु नै शिवशक्ति मैथुन वा आदिदम्पतिको सामरस्य हो । यो नै श्रीसाधनाको परम उपलब्धि, सर्वोच्च सिद्धि, महामुक्ति एवं परनिर्वाण हो ।

शाक्तोपासना अद्वैतप्रधान उपासना भएकाले शिवचक्र र शक्तिचक्रको अभिन्नता, शिव र शक्तिको अभिन्नता, शरीर र श्रीचक्रको अभिन्नता, श्रीचक्र र ब्रह्माण्डको अभिन्नता, यन्त्र र चक्रको अभिन्नता, वर्ण र चक्रको अभिन्नताको भावना गर्दै सम्पूर्ण भेददृष्टिलाई समाप्त गरी 'अहं देवी न चान्योऽस्मि ब्रह्मैवाहं न शोकभाक् । सच्चिदानन्दरूपोऽहमात्माहम्' को पूर्ण अद्वैत अनुभूति गर्नु नै प्रत्येक साधकको सर्वोच्च लक्ष्य हो । यो नै परम सत्यको साक्षात्कार, अनुत्तर पूर्णताको स्थिति र परम कैवल्य वा महामोक्ष हो ।

## ४. श्रीविद्याप्रकाश व्याख्याका सम्बन्धमा

आचार्य पुण्यानन्दद्वारा विरचित "कामकलाविलासः" नामक ग्रन्थमाथि प्रा. विद्यानाथ उपाध्याय भट्टले गर्नुभएको नेपाली पद्यव्याख्याको नाम श्रीविद्याप्रकाश रहेको छ । श्रीविद्यामाथि प्रकाश पार्ने भएकाले उक्त नाम अत्यन्त सार्थक देखिन्छ । संस्कृत कारिकामा निबद्ध मूल कारिकाको भावलाई सरल नेपाली भाषामा अनुष्टुप् छन्दमा पद्यबद्ध गरिएकाले उक्त पद्यव्याख्या पढ्नका लागि रोचक र सरल रहेको छ । कहीँकहीँ छन्दसम्बन्धी नियम भङ्ग भएको देखिए तापनि गम्भीर दार्शनिक भावलाई स्वतः स्फूर्तरूपमा पद्यका माध्यमबाट व्यक्त गर्दा त्यसो हुनु स्वाभाविक मान्न सकिन्छ । अर्को कुरा व्याख्यालेखनका क्रममा साहित्यिक सचेतताको भावभन्दा विषयवस्तुको प्रतिपादन यथार्थ रूपमा होस् भन्ने भाव बढी क्रियाशील भएकाले त्यस्तो हुन गएको देखिन्छ जुन अत्यन्त उचित छ । पद्यरचनामा पटक्कै कृत्रिमता देखिँदैन, पद्यको प्रवाह अविच्छिन्न गतिमा अगाडि बढेको छ र कारिकाको भाव समाप्त नहुन्जेलसम्म त्यो प्रवाह रोकिएको देखिँदैन त्यसैले एउटा

कारिका कहीँ दुई हरफमै समाप्त भएको छ भने कहीँ तीस हरफसम्म पुगेको छ । व्याख्याका क्षेत्रमा यो एउटा नयाँ सुन्दर प्रयोग बनेको छ र यसले विशिष्ट महत्त्व राख्नेछ भन्ने विश्वास गर्न सकिन्छ ।

## ५. गार्ग्यायणी व्याख्याका सम्बन्धमा

पूर्वीय वाङ्मयमा कुनै मौलिक कृतिमाथि टीका वा भाष्य लेख्नु, पुनः उक्त टीका वा भाष्यमाथि नयाँ टीका वा व्याख्या लेख्ने एउटा विशिष्ट बौद्धिक परम्परा रहेको छ । सोही परम्पराको एउटा श्रृङ्खलाको रूपमा यसै पङ्क्तिकारद्वारा "गार्ग्यायणी" नामक नेपाली गद्यव्याख्या लेखिएको हो । आचार्य पुण्यानन्दले रचना गर्नुभएको श्रीविद्यापम्पराको प्रसिद्ध ग्रन्थ कामकलाविलासमाथि प्रा. विद्यानाथ उपाध्याय भट्टले गर्नुभएको श्रीविद्याप्रकाश नामक नेपाली पद्यव्याख्यालाई अझ सुस्पष्ट र बोधगम्य बनाउने उद्देश्यले आवश्यक टिप्पणीका साथ गार्ग्यायणी नामक सरल नेपाली गद्यव्याख्या लेखिएको हो । आशा छ यसलाई विद्वान् सहृदयी पाठकहरूले उचित मूल्याङ्कन गर्नुहुनेछ ।

## ६. ग्रन्थसम्पादनका सन्दर्भमा

ग्रन्थसम्पादनका क्रममा सर्वप्रथम आचार्य पुण्यानन्दनाथद्वारा विरचित कामकलासविलास नामक ग्रन्थको मूल संस्कृत कारिका, त्यसपछि उक्त ग्रन्थमाथि प्रा. विद्यानाथ उपाध्याय भट्टले गर्नुभएको श्रीविद्याप्रकाश नामक पद्यव्याख्या र त्यसभन्दा तल गार्ग्यायणी नामक नेपाली गद्यव्याख्या समावेश गरिएको छ ।

प्रस्तुत ग्रन्थमाथि सङ्क्षिप्त उपोद्घात एवं गार्ग्यायणी नामक व्याख्या लेख्नका लागि सुझाव एवं अवसर प्रदान गर्नुका साथै ग्रन्थसम्पादनको समेत अभिभारा दिनुहुने आदरणीय दाजु सहप्राध्यापक श्रीनवराज कट्टेलप्रति आभार व्यक्त गर्न चाहन्छु ।

उपोद्घात एवं गार्ग्यायणी व्याख्यालाई मनोयोगपूर्वक अध्ययन गरेर



आवश्यक सल्लाह र सुझाव दिई आदरणीय गुरु प्राध्यापक श्रीविद्यानाथ उपाध्याय भट्टले मप्रति देखाउनु भएको अपार स्नेह धन्यवादको सीमाभन्दा पर छ । अतः म उहाँप्रति सतत नतमस्तक हुन चाहन्छु ।

यस ग्रन्थको मूल संस्कृत कारिका र श्रीविद्याप्रकाश नामक टीकाको सम्पादनमा आफ्नो अमूल्य समय र श्रम प्रदान गर्नुहुने आदरणीय सहप्राध्यापक श्रीमाधवप्रसाद लामिछाने, धर्मशास्त्राचार्यलाई पनि धन्यवाद अर्पण गर्नु म आफ्नो कर्तव्य सम्झन्छु ।

अन्त्यमा पुस्तक सम्पादनका क्रममा अज्ञानतावश वा प्रमादवश केही त्रुटि रहन गएका भए विज्ञ पाठकहरूले त्यसलाई सच्याएर पढिदिनु हुनेछ भन्ने विश्वासका साथ आफ्नो कथनलाई यहीँ पूर्णविराम दिन्छु ।

**यद्यत्र किञ्चित् स्खलितं प्रमादेन भ्रमेण वा ।**
**तन्त्रज्ञास्तच्छोधयन्तु कस्य न स्खलितं मनः ॥**

**माधवप्रसाद लामिछाने**,
उपप्राध्यापक, पूर्वमीमांसा तथा तन्त्रविभाग,
नेपाल संस्कृत विश्वविद्यालय,
वाल्मीकि विद्यापीठ,
प्रदर्शनीमार्ग, काठमाडौं ।



श्रीचक्र

आचार्य पुण्यानन्दविरचितः

# कामकलाविलासः

("श्रीविद्याप्रकाश" - नेपालीपद्यव्याख्यया "गार्ग्यायणी" - नेपालीगद्यव्याख्यया च विभूषितः)

सकलभुवनोदयस्थितिलयमयलीलाविनोदनोद्युक्तः ।
अन्तर्लीनविमर्शः पातु महेशः प्रकाशमात्रतनुः ॥१॥

•श्रीविद्याप्रकाश•

सबै भुवनको सृष्टि, रक्षा, लय गरी गरी ।
लीलाले जो खुसी हुन्छन् महेश्वर सधैँभरि ॥
विमर्श उनकै शक्ति जगत्रूपी प्रपञ्च यो ।
उनैबाट व्यक्त हुन्छ विलीन उनमै छ जो ॥
प्रकाश मात्र जसको विराट् विग्रह दिव्य छ ।
उनै महेशले रक्षा गरून् यो बिन्ति नित्य छ ॥

•गार्ग्यायणी•

नमो गुरुभ्यां स्थानेश्वरदिवाकराभ्यां
नमः परमगुरवे व्रजवल्लभाय
विद्यानाथाय च नमो जगद्धेतवे भवाय
वागीश्वरीं गणपतिं वन्दे स्वपितरावहम् ।

विश्वोत्तीर्णमहाप्रकाशवपुषं शक्तिञ्च श्रीसुन्दरीम् ।
नत्वा विश्वगुरुं परात्परतमं मथ्नामि तन्त्रारणिम् ॥
ज्योतिःकामकलाविलासखचितं गार्ग्यायणी व्याख्यया ।
भूयाद्भासितमम्बिके ! सुनयने ! नेत्रे समुद्घाटय ॥

आफ्नो असीम तथा अप्रतिहत स्वातन्त्र्यशक्तिका माध्यमबाट सम्पूर्ण लोकको सृष्टि, स्थिति, प्रलय, तिरोधान एवं अनुग्रहस्वरूप पञ्चकृत्यात्मक

लीलामा प्रवृत्त, आफूभित्र अन्तर्लीन विमर्शशक्तिले सम्पन्न तथा केवल प्रकाशस्वरूप महेश्वरले रक्षा गरून् ।

यस कारिकामा आचार्य पुण्यानन्दले सम्पूर्ण विद्याकी अधिष्ठात्री भगवती त्रिपुरसुन्दरीको मन्त्र, चक्र एवं पूजाक्रममाथि प्रकाश पार्ने मूल उद्देश्यका साथ सर्वप्रथम त्रिपुरसुन्दरीको युगनद्ध कामकामेश्वरीरूप महेश्वरको वन्दना गरेका छन्। सोही क्रममा महेश्वरको विश्वमय तथा विश्वोत्तीर्ण स्वरूपको चर्चा गरिएको छ । कारिकामा आएको *सकलभुवनोदयस्थितिलयमयलीलाविनोदनोद्युक्तः* पदावलीले महेश्वरको विश्वमय स्वरूपलाई सङ्केत गरेको छ ।

नामरूपात्मक विश्ववैचित्र्यको परम कारणस्वरूप परम सत्तालाई शिवपारम्यवादीहरू परम शिव वा महेश्वरका नामले चिन्दछन् भने शक्तिपारम्यवादीहरूचाहिँ सोही परम सत्तालाई त्रिपुरसुन्दरी, महाकाली, ललिता आदि नामले चिन्दछन्। माकुराले जालोलाई ओकल्ने र फेरि निल्ने कार्य गरेझैँ महेश्वरले पनि आफूभित्र अभिन्न रूपमा रहेको जगत्लाई बाहिर प्रकट गर्ने र आफैँभित्र लय गर्ने लीला सम्पन्न गर्दछन्। महेश्वरको यो लीला सृष्टि, स्थिति, संहार, तिरोधान एवं अनुग्रहस्वरूप उनका पाँचवटा कृत्यका माध्यमबाट सम्पन्न हुन्छ। महेश्वर सर्वज्ञत्व, सर्वेश्वरत्व, सर्वकर्तृत्व, पूर्णत्व तथा व्यापकत्वरूप पञ्चशक्तिले सम्पन्न छन् तथा सृष्टि, स्थिति, संहार, तिरोधान एवं अनुग्रह उनका पाँचवटा कृत्य हुन्[१] । यहाँ एउटा कुरा के स्मरणीय छ भने शङ्कराचार्यको अद्वैतवादी दृष्टिमा ब्रह्म निष्क्रिय छ[२] भने अद्वैतवादी शैव तथा शाक्तदर्शनमा ब्रह्मस्थानीय परम शिव वा महेश्वर सक्रिय छन्[३] ।

१. सृष्टिसंहारकर्तारं विलयस्थितिकारकम् ।
अनुग्रहकरं देवं प्रणतार्तिविनाशनम् ॥
— स्वच्छन्दतन्त्र, पटल १ ।

तथा
शिवः स्वतन्त्रदृग्रूपः पञ्चशक्तिसुनिर्भरः । — तन्त्रालोक, ९ ।

२. अतः परं ब्रह्म सदद्वितीयं
विशुद्धविज्ञानघनं निरञ्जनं ।
प्रशान्तमाद्यन्तविहीनमक्रियं
निरन्तरानन्दरसस्वरूपम् ॥
— विवेकचूडामणि, २३९ श्लोक ।

३. अस्ति देवि ! परं ब्रह्म स्वरूपी निष्कलः शिवः ।



यसप्रकार महेश्वर आफ्नो असीम स्वातन्त्र्यशक्तिका माध्यमबाट सृष्टि, स्थिति, संहार, तिरोधान एवं अनुग्रहरूप पाँचवटा कृत्य सम्पादन गर्दै आफूलाई विश्वमय बनाउँछन् ।

कारिकाको *अन्तर्लीनविमर्शः* तथा *प्रकाशमात्रतनुः* शब्दले महेश्वरको विश्वोत्तीर्ण स्वरूपलाई सङ्केत गरेको छ । म नै जगत्‌को सृष्टि, स्थिति, संहार, तिरोधान एवं अनुग्रहको मूल कारण हुँ भन्ने अकृत्रिम अनुभूतिलाई विमर्श भनिन्छ । उक्त विमर्श शिवमा परा शक्तिका रूपमा नित्य विद्यमान छ र त्यसैका माध्यमबाट शिवले सृष्टि, स्थिति आदि पञ्चकृत्य सम्पादन गर्दछन् । सो विमर्श सृष्टिकालमा विश्वाकार रूपमा, स्थितिकालमा विश्वप्रकाशनका रूपमा र संहारकालमा विश्वसंहारका रूपमा रहन्छ । उक्त विमर्शरूप पराशक्ति शिवमा अन्तर्लीन अवस्थामा रहँदा जसरी विशाल वृक्ष सूक्ष्म बीजमा अव्यक्त रूपमा रहन्छ त्यसरी नै सम्पूर्ण जगत् शिवमा अव्यक्त रूपमा रहेको हुन्छ[४]।

म इच्छा गर्छु, म जान्दछु, म गर्दछु आदिका रूपमा स्फुरण हुने अहं रूप आत्मविमर्शलाई नै प्रकाश भनिन्छ । पराशक्तिलाई विमर्श भनिन्छ भने परम शिवलाई प्रकाश भनिन्छ । उक्त प्रकाशरूप परम शिव सर्वज्ञत्व, सर्वेश्वरत्व, सर्वकर्तृत्व,पूर्णत्व एवं व्यापकत्वरूप पाँचवटा शक्तिले सम्पन्न छ । प्रकाश परमात्माको स्वरूप हो भने विमर्श प्रकाशरूप परमात्माको पूर्णताको प्रतीति हो । पारमार्थिक दृष्टिले हेर्ने हो भने प्रकाश नै विमर्श हो र विमर्श नै प्रकाश हो । ती दुवैमा अभिन्नता छ[५] । विश्वोत्तीर्ण महेश्वर केवल प्रकाशरूप छ । विश्वलाई प्रकाशित गर्ने परम कारणरूप एवं स्वयंप्रकाशरूप भएकाले महेश्वरलाई प्रकाश भनिएको हो । त्यसैले महेश्वरको विश्वोत्तीर्णता उसको इच्छाको प्रथम स्पन्दन हो भने विश्वमयता उसको क्रियाशक्तिको विस्तार हो । महेश्वर विश्वोत्तीर्ण अवस्थामा रहेको बेला सम्पूर्ण चराचर जगत् उसको हृदयमा बीजरूपमा रहेको हुन्छ भने ऊ विश्वमय अवस्थामा

सर्वज्ञः सर्वकर्ता च सर्वेशो निर्मलाशयः ॥
कुलार्णवतन्त्र ।

४. यथा न्यग्रोधबीजस्थशक्तिरूपो महाद्रुमः ।
तथा हृदयबीजस्थं जगदेतच्चराचरम् ॥

५. शक्तिशक्तिमतोर्यद्वदभेदः सर्वदा स्थितः ।
अतस्तद्धर्मधर्मित्वात् परा शक्तिः परात्मनः ॥
— विज्ञानभैरव, १८ श्लोक ।

रहेको बेला आफ्नो क्रियाशक्तिको विस्तारको फलस्वरूप ऊ नामरूपात्मक विश्ववैचित्र्यका रूपमा आभासित हुन्छ । त्यसैले नामरूपात्मक समग्र विश्व प्रकाशरूप छ र शिवदेखि अभिन्न छ ॥१॥

**सा जयति शक्तिराद्या निजसुखमयनित्यनिरूपमाकारा ।**
**भाविचराचरबीजं शिवरूपविमर्शनिर्मलादर्शः ॥२॥**

**•श्रीविद्याप्रकाश•**

**शिवकै जो आद्यशक्ति सर्वोत्कृष्ट छ विश्वमा ।**
**आनन्द जसको आफ्नै उपमै छैन लोकमा ॥**
**भावी बीज उनी नै हुन् जडचेतन विश्वको ।**
**उनै निर्मल ऐनाझैँ शिवरूप विमर्शको ॥**

**•गार्ग्यायणी•**

शाश्वत एवं अनुपम आत्मसुखमा लीन रहेकी, नित्य एवं अतुलनीय स्वरूप भएकी, भावी चराचर जगत्की बीजरूपिणी, शिवरूप परिपूर्ण अहं प्रतीतिका लागि निर्मल ऐनाझैँ भएकी आद्या विमर्शशक्ति सर्वोत्कृष्ट रूपमा रहेकी छिन् ।

महात्रिपुरसुन्दरी पराभट्टारिका विमर्शशक्ति विश्वकी आद्या शक्ति हुन् । शिवदेखि पृथ्वीसम्मका समस्त ३६ तत्त्व तिनै विमर्शशक्तिमा निहित छ[६]। प्रकाश नै विमर्श र विमर्श नै प्रकाश भएकाले तथा वस्तुतः ती दुवैमा अभिन्नता रहेकाले विमर्शशक्ति विश्वातीत तथा विश्वमय दुवै छिन्[७] । विमर्शरूपिणी त्रिपुरसुन्दरीलाई परम शिवको अभिन्न तथा स्वाभाविक इच्छा, ज्ञान एवं क्रियाशक्तिको रूप मानिएको छ । सोही स्वाभाविक शक्तिलाई

---

[६] त्रिपुरा परमा शक्तिराद्या जाता महेश्वरी ।
स्थूलसूक्ष्मविभेदेन त्रैलोक्योत्पत्तिमातृका ॥
कवलीकृतनिश्शेषतत्त्वग्रामस्वरूपिणी ।
वामकेश्वरतन्त्र, कामकलाविलास (चिद्वल्लीटीका) मा उद्धृत, पृ. १७ ।

[७] विश्वात्मिकां तदुत्तीर्णां प्रकाशामर्शरूपिणीम् ।
परापरमयीं देवीमात्मत्वेन विशाम्यहम् ॥
सच्चिदानन्दवासना, कामकलाविलास (चिद्वल्लीटीका) मा उद्धृत, पृ. १८ ।



इच्छा, ज्ञान र क्रियाको समष्टि रूपमा शान्ता; पश्यन्ती, मध्यमा र वैखरी वाणीको समष्टि रूपमा परा एवं वामा, ज्येष्ठा र रौद्रीको समष्टि रूपमा अम्बिका भनिन्छ । विमर्शशक्ति स्वाभाविक आनन्दले परिपूर्ण छ अर्थात् परिपूर्ण स्वाभाविक आनन्द नै विमर्शरूप त्रिपुरादेवीको स्वरूप हो । सोही स्वाभाविक आनन्दशक्तिका माध्यमबाट नै प्रकाशरूप परम शिवलाई निरतिशय आनन्दको अनुभूति हुन्छ। सोही शाश्वत एवं परिपूर्ण आनन्दशक्ति नै सृष्टिको मूल केन्द्र हो । त्यसैले उपनिषद्मा भनिएको छ — आनन्दादेव खल्विमानि भूतानि जायन्ते। शाक्तदर्शनका अनुसार प्रकाश एवं विमर्श एउटै परम सत्ताका दुईवटा पक्ष हुन् । शक्तिको विमर्शरूपताका कारण नै जगत् अभिव्यक्त हुन्छ। यो जगत् शक्ति वा शक्तिमान्को स्वतः सञ्चालित इच्छाको अभिव्यक्ति हो। परमेश्वरको मानसमा जब सिसृक्षा उत्पन्न हुन्छ तब उनको दुईवटा रूप बन्न पुग्छ — शिव र शक्ति । शिव प्रकाशरूप छन् भने शक्ति विमर्शरूप । सृष्टिदशामा शिव र शक्ति दुवै एकअर्कामा प्रविष्ट हुन्छन् । प्रकाशरूप शिव विमर्शरूप शक्तिमा प्रवेश गरेपछि बिन्दुको आविर्भाव हुन्छ भने शक्ति शिवमा प्रवेश गरेपछि सो बिन्दु केही फुल्छ र त्यसबाट नादको आविर्भाव हुन्छ। प्रकाशको अंशस्वरूप श्वेत बिन्दु र शक्तिको अंशस्वरूप रक्त बिन्दु नादको मिलनबाट मिश्रबिन्दु बन्छ जसलाई काम वा रवि भनिन्छ। यिनै तीन बिन्दुको समरसाकार महाबिन्दु नै कामकला वा महात्रिपुरसुन्दरीको स्वरूप हो त्यसैले कामकला वा महात्रिपुरसुन्दरीलाई चराचरजगत्को बीज मानिएको हो । विमर्शशक्ति प्रकाशरूप शिवको अहन्ताबोधक ऐना हो । जसरी कुनै व्यक्तिले निर्मल ऐनामा आफ्नो प्रतिबिम्ब देखेर आफ्नो अनुहारको ज्ञान गर्दछ त्यसरी नै शिवले पनि आफूमा अन्तर्लीन आत्मशक्तिलाई देखेर आफ्नो परिपूर्ण अहन्ता तथा प्रकाशमय स्वरूपको बोध गर्दछन् त्यसैले विमर्शशक्तिलाई शिवको परिपूर्ण अहन्ताबोधक निर्मल ऐना मानिएको हो ॥२॥

**स्फुटशिवशक्तिसमागमबीजाङ्कुररूपिणी पराशक्तिः ।**
**अणुतररूपानुत्तरविमर्शलिपिलक्ष्यविग्रहा भाति ॥३॥**

**•श्रीविद्याप्रकाश•**

**शिवकी ती पराशक्ति प्रकृति सब विश्वकी ।**
**बीजाङ्कुर प्रक्रियाले जगत्को सृष्टि गर्दछिन् ॥**
**यस्मा कारण जो व्यक्त शिवशक्तिसमागम ।**

**पृथ्वीसम्म यसैबाट उद्भूत व्यक्त बन्दछ ॥**
**शिवकी ती पराशक्ति अणुभन्दा झनै अणु ।**
**सूक्ष्मभन्दा झनै सूक्ष्म वर्णनातीत रूपकी ॥**
**अनुत्तर लिपि अ र विमर्श ह मिलीकन ।**
**अहं म बन्छ जो भाव अहन्ता दिव्यविग्रह ॥**
**समस्त वर्णको गुच्छा उन्को नित्य स्वरूप छ ।**
**प्रकाश विश्व ती गर्छिन् आफैँ भै स्वप्रकाशित ॥**

**•गार्ग्यायणी•**

पराशक्ति महात्रिपुरसुन्दरी शिव एवं शक्तिको व्यक्त सामरस्यस्वरूपले रहेकी छिन् । सूक्ष्मभन्दा पनि सूक्ष्म स्वरूप भएकी परमा शक्ति अनुत्तरलिपि अ तथा विमर्शलिपि हको संयोगबाट व्यक्त हुने अहंस्वरूपले भासित हुन्छिन् ।

पराशक्ति महात्रिपुरसुन्दरी प्रकाशरूप शिव र विमर्शरूप शक्ति अर्थात् ज्ञानशक्ति र क्रियाशक्तिको स्पष्ट समागम हुँदा बीजाङ्कुररूपले रहन्छिन् अर्थात् कार्यकारणभाव दुवैले रहन्छिन् । शिवको अभिन्न शक्ति भनेको नै चित्, आनन्द, इच्छा, ज्ञान र क्रिया हो । विमर्शशक्तिका माध्यमबाट नै शिवमा "म परिपूर्ण छु" भन्ने बोध हुन्छ । त्यही परिपूर्ण अहन्ताबोधपछि नै शिवमा सिसृक्षा उत्पन्न भई सृष्टि आदि कार्य सम्भव हुन्छ । सृष्टिदशामा त्यही शक्ति नै विश्वप्रपञ्चका रूपमा बाहिर उल्लसित हुन्छ त्यसैले पराशक्तिलाई बीज एवं अङ्कुर दुवै स्वरूप मानिएको हो ।

भगवती त्रिपुरसुन्दरी सूक्ष्मभन्दा पनि अझ सूक्ष्म तथा स्थूलभन्दा पनि अझ स्थूल छिन् । त्यस्ती पराशक्ति अनुत्तरलिपि **अ** र विमर्शलिपि **ह** को संयोगबाट बन्ने **अहं** रूपले भासित हुन्छिन् । जसरी प्रत्याहारन्यायले अ–हका बीच समस्त वर्णहरू समेटिएका छन् त्यसरी नै पराशक्तिले सम्पूर्ण चराचर जगत्लाई आफूभित्र समेटेकी छिन् त्यसैले उनलाई अहंस्वरूपिणी भनिएको हो ॥३॥

**परशिवरविकरनिकरे प्रतिफलति विमर्शदर्पणे विशदे ।**
**प्रतिरुचिरुचिरे कुड्ये चित्तमये निविशते महाबिन्दुः ॥४॥**

**•श्रीविद्याप्रकाश•**



**शिवको सूर्यको जस्तै प्रकाश स्व-स्वभाव हो ।**
**उन्कै किरणको पुञ्ज ऐना विशद निर्मल ॥**
**त्यसै विमर्शमा आफ्नो स्वरूप हेर्दछन् शिव ।**
**शिव बिम्ब, प्रतिबिम्ब विमर्श शिवकै न हो ॥**
**जति प्रकाश यो उत्ति राम्रो त्यो ज्ञानचित्तमा ।**
**पूर्ण मको महाबिन्दु प्रविष्ट चित्तमा भयो ।**
**पूर्ण मको महाभाव महाबिन्दु प्रकाश हो ।**
**सुभासित त्यही हुन्छ शिवाभिन्न विमर्शमा ॥**

**•गार्ग्यायणी•**

जसरी ऐनालाई सूर्यतिर फर्काएर राख्दा त्यसमा प्रतिबिम्बित सूर्यका किरणहरू कुनै भित्तामा परेपछि प्रकाशमय वृत्तको रूपमा देखिन्छ त्यसरी नै प्रकाशस्वरूप परम शिवका किरणहरू विमर्शरूपी ऐनामा परेपछि चित्तमय भित्तामा महाबिन्दु प्रकाशित हुन थाल्छ ।

यस कारिकामा परम शिवलाई सूर्य, विमर्शशक्तिलाई ऐना र चित्तलाई भित्ताको उपमा दिइएको छ । प्रकाशरूप परम शिवको सम्बन्ध उनको आफ्नै अभिन्न विमर्शशक्तिका साथ भएपछि परम शिवलाई आफ्नो परिपूर्ण अहन्ताको बोध हुन्छ । त्यही "म परिपूर्ण छु" भन्ने बोधलाई नै यहाँ परमेश्वररूप महाबिन्दु मानिएको छ । उक्त परिपूर्ण अहन्ताको बोध नै परम शिवको नैसर्गिक विमर्शस्वरूप स्फुरत्ता हो । आफ्नो त्यही स्फुरत्ताको योगबाट नै शिव जगत्को सृष्टि, स्थिति एवं संहाररूप लीलामा प्रवृत्त हुन्छन्[८] । प्रलयकालमा समस्त चराचर जगत्लाई आफूमा अन्तर्लीन गरेर विमर्शस्वरूप महाशक्ति प्रकाशस्वरूप परम शिवका साथ सामरस्यस्वरूपले रहेकी हुन्छिन् । परम शिवमा सिसृक्षा उत्पन्न हुने बित्तिकै विमर्शशक्ति प्रकाशरूप परम शिवबाट भिन्नझैँ भएर सम्मुख देखा पर्छिन् । दुवै ऐनाझैँ निर्मल भएकाले एकअर्कामा प्रतिबिम्बित हुन्छन् र परिपूर्ण अहन्ताबोधस्वरूप महाबिन्दु भासित हुन्छ । त्यही अहम्भाव नै सृष्टि, स्थिति एवं प्रलयको मूल कारण हो ॥४॥

**चित्तमयोऽहङ्कारः सुव्यक्ताहार्णसमरसाकारः ।**
**शिवशक्तिमिथुनपिण्डः कवलीकृतभूमण्डलो जयति ॥५॥**

८ नैसर्गिकी स्फुरत्ता विमर्शरूपास्य वर्तते शक्तिः ।
तद्योगादेव शिवो जगदुत्पादयति पाति संहरति ॥

**•श्रीविद्याप्रकाश•**

**अहम्, अहम् = म म यो नै अहङ्कारविमर्श हो ।**
**ज्ञानमय यही चित्त सर्वोत्कृष्ट विशिष्ट हो ॥**
**अकार प्रकाश शिव हकार शक्ति नै मिली ।**
**यी दुवैको मिथुन नै यौटै पिण्ड भएपछि ॥**
**शिवशक्ति मिथुनपिण्ड अहङ्कार म यो भयो ।**
**यसैले व्याप्त भुवन सर्वतत्त्व समूह भो ॥**
**अहङ्कार म नै भिन्न प्रकाश र विमर्श छ ।**
**यही हो विश्वको रूप योदेखि भिन्न के छ र ?**

**•गार्ग्यायणी•**

ज्ञानशक्ति र क्रियाशक्तिको समुदित प्रकाशबाट आलोकित चित्त नै अहङ्कार (अहं तत्त्व) हो । यो अहंतत्त्व प्रकाशरूप अकार र विमर्शरूप हकारको मिथुनपिण्ड हो । अनुत्तरलिपि अकार शिवको वाचक हो भने विसर्गलिपि हकार शक्तिको वाचक हो त्यसैले अ र ह को संयोगबाट बन्ने अहंले शिव र शक्तिको अद्वय मिथुनपिण्डको रूप धारण गर्दछ[९] । हृदयप्रदेशमा अकार एवं द्वादशान्त (आज्ञाचक्रभन्दा माथि निधारमा रहेको अर्धचन्द्र ) मा हकारको उदय हुन्छ[१०] । यही अहंले प्रत्याहारन्यायले समस्त विश्व एवं वर्णलाई आफूभित्र समेटेर रहेको छ ॥ ५॥

**सितशोणबिन्दुयुगलं विविक्तसितशोणसङ्कुचत्प्रसरम् ।**
**वागर्थसृष्टिहेतुः परस्परानुप्रविष्ट विस्पष्टम् ॥६॥**
**बिन्दुरहङ्कारात्मा रविरेतन्मिथुनसमरसाकारः ।**
**कामः कमनीयतया कला च दहनेन्दुविग्रहौ बिन्दू ॥७॥**

---

९. अनुत्तर विसर्गात्म शिवशक्त्यद्वयात्मनि ।
परामर्शो निर्भरत्वादहमित्युच्यते विभोः ॥

तन्त्रालोक ।

१०. हृद्यकारो द्वादशान्ते हकारस्तदिदं विदुः ।
अहमात्मकमद्वैतं यः प्रकाशात्मविश्रमः ॥

तन्त्रालोक ।



**•श्रीविद्याप्रकाश•**

**सेतो रातो दुई बिन्दु शिवशक्तिस्वरूप हुन् ।**
**तिनकै सङ्कोच भै फेरि परस्पर प्रविष्ट छन् ॥**
**यौटै बनेपछि सृष्टि शब्द र अर्थको भयो ।**
**शब्दार्थसृष्टिको हेतु यसैले पिण्ड भैगयो ॥**
**बिन्दु नै हो अहङ्कार मको नै यो स्वरूप हो ।**
**यही सेतो तथा रक्त मिलेको कामबिन्दु हो ॥**
**सेतो तथा रक्त बिन्दु ती बने कामका कला ।**
**आगो र चन्द्रको रूप यही कामकला बन्यो ॥**
**शक्ति प्रविष्ट शिवमा प्रविष्ट शिव शक्तिमा ।**
**भई बन्दा कामकला बिन्दुनादस्वरूप भो ॥**
**समष्टिरूप तिनको अहम् मको स्वरूप हो ।**
**त्यसैभित्र विश्व सारा जगत्रूपी प्रपञ्च यो ।**

**•गार्ग्यायणी•**

यस चित्तमय महाबिन्दुमा सेतो र रातो दुईवटा बिन्दु छन् । यी दुई बिन्दु प्रकाशरूप शिव र विमर्शरूप शक्तिका स्वरूप हुन् । शिव र शक्तिको यसै स्वरूपमा सम्पूर्ण सृष्टिको विस्तार लुकेको छ । परा, पश्यन्ती, मध्यमा, वैखरीरूप वाक्सृष्टि एवं शिवदेखि पृथ्वीसम्मको समग्र अर्थसृष्टिको मूल कारण यही हो । यस बिन्दुयुगलमा कामेश्वर (प्रकाशरूप शिव) र कामेश्वरी (विमर्शरूप शक्ति) को दिव्य मिथुनस्वरूप परस्पर समरस तथा विभक्त दुवै रूपमा भासित हुन्छ । समरस रूपमा भासित हुने बिन्दुयुगल अहंतत्त्व हो जसलाई रविबिन्दु भनिन्छ । बिन्दुयुगलको यो समरसभाव सबैका लागि कमनीय (रुचिकर) भएकाले यसलाई कामबिन्दु पनि भनिन्छ । विभक्त स्वरूपमा भासित हुने दुईवटा बिन्दु समरसस्वरूप कामबिन्दु वा रविबिन्दुका अग्नि एवं सोम नामक कला हुन् ।

निष्कल तत्त्वातीत परम शिव वा पराशक्ति नै विश्वको मूल केन्द्रमा उत्तीर्ण रूपमा विद्यमान छ । विश्वविकासका प्रति उसको उन्मुखता वा स्फुरत्ता नै प्रकाशस्वरूप परम शिवको रश्मिपुञ्जबाट निर्मित निर्मल विमर्शस्वरूप ऐना हो । यसै विमर्शस्वरूप ऐनामा प्रतिबिम्बित परम शिवलाई सर्वप्रथम परिपूर्ण

अहंको बोध हुन्छ । यो अहं नै अकारादि वर्णरूप वाचक एवं शिवदेखि पृथ्वीसम्मको पदार्थरूप वाच्यले युक्त विश्वविकासको प्रथम सोपान हो । छत्तीस तत्त्वले युक्त समस्त भुवनमण्डललाई मयूररसन्यायले आफूभित्र समेटेर रहेको अहंतत्त्वलाई शिवशक्तिस्वरूप दिव्यदम्पतिको सामरस्यस्वरूप मानिन्छ । अहंले आफूभित्र प्रत्याहारन्यायले ५० वर्णहरूलाई समेटेको छ । अहंको अकार अनुत्तर प्रकाशस्वरूप शिवको सङ्केत हो भने हकार विमर्शस्वरूप शक्तिको सङ्केत हो । यसै अहंस्वरूप महाबिन्दुमा शुक्ल, रक्त एवं मिश्र गरी तीनवटा बिन्दुहरू रहेका छन् । शुक्लबिन्दु प्रकाशस्वरूप शिव हो भने रक्तबिन्दु विमर्शस्वरूप शक्ति हो । ती दुवैको समरसभाव मिश्रबिन्दु सूर्यस्वरूपात्मक कामबिन्दु हो । प्रकाशस्वरूप शुक्लबिन्दु एवं विमर्शस्वरूप रक्तबिन्दु सूर्यस्वरूपात्मक कामबिन्दुका अग्नि र सोम नामक कला हुन् । अतः अग्नि र सोम नामक कला र ती दुवैको समरसभाव कामबिन्दुको समष्टिलाई नै कामकला वा त्रिपुरसुन्दरी भनिन्छ ॥ ६–७ ॥

**इति कामकला विद्या देवीचक्रात्मिका सेयम् ।**
**विदिता येन स मुक्तो भवति महात्रिपुरसुन्दरीरूपः ॥८॥**

**•श्रीविद्याप्रकाश•**

**यही कामकलाविद्या देवी चक्रस्वरूपकी ।**
**जान्ने जो होस् भयो मुक्त स्वयं देवीस्वरूप भै ॥**

**•गार्ग्यायणी•**

यस कामकलानामक महात्रिपुरसुन्दरी विद्याको यही स्वरूप हो । श्रीचक्र, श्रीविद्या आदि क्रमले जसले यस विद्यालाई जान्दछ त्यस्तो साधक स्वयं महात्रिपुरसुन्दरीस्वरूप भई मुक्त हुन्छ ।

भगवत्कृपाबाट जब विषयवासनाप्रति वैराग्य उत्पन्न हुन्छ र मोक्षप्रति श्रद्धा उत्पन्न हुन्छ तब साधक योग्य गुरुको खोजीमा निस्कन्छ । योग्य गुरु फेला परेपछि गुरुको सान्निध्यमा रही गुरुबाट राम्ररी परीक्षित भई प्रारम्भमा उसले समय दीक्षा प्राप्त गर्दछ । समय दीक्षा प्राप्त गरेपछि समयाचारको राम्ररी पालना गर्दै जाँदा भगवत्कृपारूप शक्तिपातको मात्रा बढ्दै जान्छ र योग्यता एवं अधिकारको ख्याल गरी गुरुले विशेष दीक्षा प्रदान गर्दछन् । विशेष दीक्षा प्राप्त गरेपछि आगम तथा तन्त्र आदि शास्त्रको अध्ययन, चिन्तन, मनन गर्ने अधिकार र योयता प्राप्त हुन्छ । त्यसपछि साधकले



गुरुबाट भगवती त्रिपुरसुन्दरीको चक्र, मन्त्र एवं पूजाक्रमको जानकारी प्राप्त गर्दछ । त्यसको सतत अभ्यास एवं साधनाबाट उसले महात्रिपुरसुन्दरीका साथ तादात्म्य, ऐकात्म्य एवं तद्रूपता प्राप्त गर्दछ[११] र अहं देवी न चान्योऽस्मि ब्रह्मैवाहं न शोकभाक् । सच्चिदानन्दरूपोऽहमात्माहंको अकृत्रिम अनुभव गरी मुक्त हुन्छ ॥८॥

**स्फुटितादरुणाद् बिन्दोर्नादब्रह्माङ्कुरो रवो व्यक्तः ।**
**तस्माद् गगनसमीरणदहनोदकभूमिवर्णसम्भूतिः ॥९॥**
**अथ विशदादपि बिन्दोर्गगनानिलवह्निवारिभूमिजनिः ।**
**एतत्पञ्चकविकृतिर्जगदिदमण्वाद्यजाण्डपर्यन्तम् ॥१०॥**

**•श्रीविद्याप्रकाश•**

**स्फुट रातो बिन्दुबाटै व्यक्त चार भयो पुनः ।**
**यही नाद शब्दब्रह्म यसैबाट जगत् बन्यो ॥**
**आकाश, वायु औ आगो, जल, भू, वर्ण भैगए ।**
**नादब्रह्म त्यसैले नै विश्वको हेतु मानियो ॥**
**विशद बिन्दुबाटै नै पाँच भूत बने सबै ।**
**यिनैको विकृति पाँच जगत् हो यो समग्र नै ॥**

**•गार्ग्यायणी•**

सृष्टिका प्रति उन्मुख रक्तबिन्दुबाट अङ्कुर(उत्पादक)स्वरूप नाद उत्पन्न भयो । उक्त नादबाट आकाश, वायु, अग्नि, जल, पृथ्वी एवं वर्णहरू उत्पन्न भए । श्वेतबिन्दुबाट पनि आकाश, वायु, अग्नि, जल र पृथ्वी उत्पन्न भए । यिनै पाँच विकृतिबाट नै अणुदेखि ब्रह्माण्डसम्मको सम्पूर्ण चराचर जगत् उत्पन्न भयो ।

शिव र शक्तिको प्रथम विकास नादका रूपमा हुन्छ भन्ने मानिएको

---

११. यद्ब्रह्मविद्यया सर्वं भविष्यन्तो मनुष्या मन्यते । किमु तत्र ब्रह्मावेद्यास्स्यातत्सर्वं भवति । अन्तेऽपि महात्रिपुरसुन्दरीरूपो भवति पराभट्टारिकात्मरूपो भवति । – बृहदारण्यकोपनिषद् ।

छ[१२] । शिव र शक्तिको संयोगस्वरूप जुन सृष्टिको कल्पना गरिएको छ त्यसमा शिव र शक्तिको संयोग एवं ती दुईको पारस्परिक सम्बन्धलाई नाद भनिन्छ । जब शिव र शक्ति क्रियात्मक रूपमा रूपान्तरित हुन थाल्छन् तब नादको उदय हुन्छ त्यसैले नादलाई क्रियारूप मानिएको छ । विमर्शस्वरूप रक्तबिन्दुको शब्दात्मक वृत्तिलाई नै नाद भनिन्छ । यसै नादबाट विश्वको विकास हुन्छ । त्यसैले नादलाई आचार्य पुण्यानन्दले अङ्कुरस्वरूप मानेका छन् । नादब्रह्माङ्कुरस्वरूप ध्वनि नै पश्यन्ती आदि वाक्‌का रूपमा व्यक्त हुन्छ । यसै ध्वनिबाट आकाश, वायु, अग्नि, जल र पृथ्वी एवं समस्त वर्णसमुदायको आविर्भाव हुन्छ ।

विमर्शस्वरूप रक्तबिन्दु र प्रकाशस्वरूप श्वेतबिन्दु वस्तुतः अभिन्न छन् त्यसैले श्वेतबिन्दुबाट पनि आकाश आदि महाभूतको आविर्भाव हुन्छ । शिव एक्लैबाट वा शक्ति एक्लैबाट सृष्टिप्रक्रिया सम्भव हुँदैन । शिव र शक्तिको संयुक्तावस्थाबाट मात्र सृष्टिप्रक्रिया सम्भव हुन्छ । सृष्टिका लागि यामलभाव आवश्यक हुन्छ । उपर्युक्त भावलाई वरिवस्यारहस्यमा यसरी दर्शाइएको छ — आफ्नी पत्नीका साथ सम्भोग गरेपछि वीर्यरूप शुक्लबिन्दु पत्नीको गर्भमा प्रवेश गर्छ, पति त्यसैका माध्यमबाट स्वयं पत्नीको गर्भमा प्रवेश गर्छ । गर्भमा प्रविष्ट वीर्यरूप शुक्लबिन्दुमा पत्नीको रजरूप रक्तबिन्दु प्रवेश गर्छ र त्यसैका माध्यमबाट पत्नी पनि गर्भमा प्रविष्ट हुन्छिन्[१३] । त्यसैले माथिको कारिकामा रक्तबिन्दुबाट अभिव्यक्त नादबाट पञ्चमहाभूत र समस्त वर्णहरूको आविर्भाव हुन्छ भनिसकेपछि पुनः दोस्रो कारिकामा श्वेतबिन्दुबाट पनि पञ्चमहाभूत आदिको आविर्भाव हुन्छ भन्नुको तात्पर्य ती दुवै बिन्दुको परस्पर सम्मिश्रणबाट नै सृष्टिप्रक्रिया आरम्भ हुन्छ भन्न खोजिएको हो ॥९–१०॥

**बिन्दुद्वितयं यद्वद्भेदविहीनं परस्परं तद्वत् ।**
**विद्यादैवतयोरपि न भेदलेशोऽस्ति वेद्यवेदकयोः ॥११॥**

---

१२. डि.एन् बोस, तन्त्राज् देयर फिलासोफी एण्ड अकल्ट सिक्रट्स, पृ. ११२ ।

१३. यथा हि कश्चित् पुरुष उत्पत्स्यमानपुत्राद्यदृष्टवशादुत्पादनेच्छाविष्टः स्वीयामुत्पादनशक्तिमवलोक्य स्वार्धशरीरात्मिकायां भार्यायां स्वयमन्तः प्रविशति शुक्लरूपेण,............ततस्तस्य शुक्लस्यान्तः शोणितबिन्दुरूपेण भार्या प्रविशति ।

वरिवस्यारहस्यम्, पृ. २५१ ।



**•श्रीविद्याप्रकाश•**

**रातो सेतो दुई बिन्दु यौटै हुन् यी अभिन्न छन् ।**
**यस्तै विद्या देवतामा भेद छैन कतै पनि ॥**
**शिवशक्ति दुवै यौटै भएझैँ वेद्यवेदक ।**
**जनाउने मन्त्र अनि जानिने देव जानिने एक हुन् ॥**

**•गार्ग्यायणी•**

प्रकाशस्वरूप शुक्लबिन्दु र विमर्शस्वरूप रक्तबिन्दु परस्पर भिन्न छैनन् किनभने यी दुई बिन्दु शिव र शक्तिका प्रतीक हुन् । शिव र शक्ति अभिन्न छन्, तिनलाई अलग गर्न सकिँदैन । त्यसैले भनिएको छ —

**न शिवेन विना देवी न देव्या च विना शिवः ।**
**नानयोरन्तरं किञ्चिच्चन्द्रचन्द्रिकयोरिव ॥**

शिव र शक्तिमा अभिन्नता भएझैँ वेदकरूप विद्या अर्थात् भगवती त्रिपुरसुन्दरीदेवीको वाचकस्वरूप पञ्चदशाक्षरी विद्या र वेद्यस्वरूप देवता अर्थात् भगवती महात्रिपुरसुन्दरीमा पनि अभिन्नता छ । मन्त्र वाचक हुन् भने देवता वाच्य हुन् । पुरुष देवताका वाचकलाई मन्त्र भनिन्छ भने स्त्रीदेवताका वाचकलाई विद्या भनिन्छ । मन्त्रको उत्पत्ति शिव र शक्तिको संयोगबाट हुन्छ भनिएको छ[१४] । मन्त्रहरू वर्णात्मक छन् र ती मूलतः शक्त्यात्मक छन् । शक्ति नै मातृकाका रूपमा वर्णहरूकी जननी हुन् र तिनी शिवस्वरूपमा स्थित छिन्[१५] त्यसैले वाच्यवाचकरूप देवता र मन्त्रमा पनि अभिन्नता भएकाले पञ्चदशाक्षरी विद्या र भगवती महात्रिपुरसुन्दरीमा पनि अभिन्नता छ ॥११॥

**वागर्थौ नित्ययुतौ परस्परं शक्तिशिवमयावेतौ ।**
**सृष्टिस्थितिलयभेदौ त्रिधा विभक्तौ त्रिबीजरूपेण ॥१२॥**

---

१४. शिवशक्तिसमायोगाज्जनितो मन्त्रराजकः ।

योगिनीहृदय, दीपिका ।

१५. सर्वे वर्णात्मका मन्त्राः ते च शक्त्यात्मकाः प्रिये ।
शक्तिस्तु मातृका ज्ञेया सा च ज्ञेया शिवात्मिका ॥

तन्त्रसद्भाव —४, लुप्तागमसङ्ग्रह, प्रथम भाग, पृ. ५३ मा उद्धृत ।

**•श्रीविद्याप्रकाश•**

**वाक् हो वर्ण, मन्त्र, पद अर्थ हो कला, तत्त्व, भुवन ।**
**यी हुन् शक्तिशिवमय विमर्श र प्रकाश हुन् ॥**
**दुवै छन् यी नित्य युक्त छन् संशक्त परस्पर ।**
**सृष्टि स्थिति र प्रलय यिन्कै तीन विभाग हुन् ॥**
**त्रिबीज हुन् तीनबिन्दु विभक्त व्यक्त बन्दछन् ।**
**समष्टि हो कामकला यही त्रिपुरसुन्दरी ॥**

**•गार्ग्यायणी•**

वर्ण, पद, मन्त्ररूप वाक् एवं कला, तत्त्व, भुवनरूप अर्थ परस्पर नित्य तादात्म्य भावले रहन्छन् । प्रकाशविमर्शमय अर्थात् शिवशक्तिमय वाक् तथा अर्थ सृष्टि, स्थिति, लयरूप अवस्थात्रयका रूपमा विभक्त छन् तथा कामकलाविद्यामा निहित ज्ञानशक्तिरूप वाग्भवबीज, क्रियाशक्तिरूप कामराजबीज तथा इच्छाशक्तिरूप शक्तिबीजका रूपमा रहेका छन् । यी तीनै बीजको समष्टिस्वरूप कामकलारूपिणी महात्रिपुरसुन्दरी भक्तहरूलाई सांसारिक बन्धनबाट मुक्त गराउने पराशक्ति हुन्[१६] ॥१२॥

**माता मानं मेयं बिन्दुत्रयभिन्नबीजरूपाणि ।**
**धामत्रयपीठत्रय-शक्तित्रयभेदभवितान्यपि च ॥१३॥**
**तेषु क्रमेण लिङ्गत्रितयं तद्वच्च मातृकात्रितयम् ।**
**इत्थं त्रितयपुरी या तुरीयपीठादिभेदिनी विद्या ॥१४॥**

**•श्रीविद्याप्रकाश•**

---

१६. तत्त्वत्रय विनिर्दिष्टा वर्णशक्तित्रयात्मिका ।
वागीश्वरी ज्ञानशक्तिर्वाग्भवा मोक्षरूपिणी ॥
कामराज्ञी कामकला कामरूपक्रियात्मिका ।
शक्तिबीजे पराशक्तिरिच्छैव ज्ञानरूपिणी ॥
एवं देवी त्र्यक्षरात्मा महात्रिपुरसुन्दरी ।
पारम्पर्येण विज्ञाता भवबन्धविमोचिनी ॥
– वामकेश्वरतन्त्र, कामकलाविलास, चिद्वल्ली टीकामा उद्धृत ।



**माता जान्ने शिवै साक्षात् मान-विद्या सुसाधन ।**
**जानिने सुन्दरी-मेय यी तीन बिन्दु बीज हुन् ॥**
**तीन धाम उनै देवी चन्द्रसूर्याग्निमण्डल ।**
**तीन पीठ, तीन शक्ति, तीन तीन सबै उनै ॥**
**तीन लिङ्ग, तीन माता, पुरी तीन पनि उनै ।**
**तुरीय पीठका भेद उनका नै स्वरूप हुन् ॥**
**विश्वमा अझ जे जे छन् सङ्कोच तीनमै भई ।**
**बिन्दु बीज तीन बन्छन् महात्रिपुरसुन्दरी ॥**

**•गार्ग्यायणी•**

महाबिन्दुस्वरूपिणी स्वयं भगवती महात्रिपुरसुन्दरी नै विश्वविकासका क्रममा शुक्ल, रक्त एवं मिश्रबिन्दुस्वरूप माता, मान, मेय अर्थात् ज्ञाता, ज्ञान, ज्ञेयरूप बिन्दुत्रयका रूपमा; वाग्भव, कामराज र शक्तिरूप बीजत्रयका रूपमा; सोम, सूर्य र अग्निरूप तीन धामका रूपमा; कामरूप, पूर्णगिरि र जालन्धररूप तीन पीठका रूपमा; इच्छा, ज्ञान, क्रियारूप तीन शक्तिका रूपमा; स्वयम्भू, बाण र इतररूप तीन लिङ्गका रूपमा; पश्यन्ती, मध्यमा र वैखरीरूप तीन मातृकाका रूपमा भासित हुन्छिन् । यसप्रकार बिन्दुत्रय, बीजत्रय, धामत्रय, पीठत्रय, शक्तित्रय, लिङ्गत्रय र मातृकात्रयरूप त्रितयात्मक सम्पूर्ण विश्वप्रपञ्चलाई आफ्नो स्वातन्त्र्यवश आफैँमा आविर्भाव एवं तिरोभाव गर्ने तुरीयविद्यास्वरूप महाशक्ति महात्रिपुरसुन्दरी नै विश्वमय अवस्थामा त्रितयस्वरूप धारण गर्दछिन् भने विश्वोत्तीर्ण अवस्थामा अखण्डचिदात्मक परं ज्योतिस्वरूपले रहन्छिन् ॥१३–१४॥

**शब्दस्पर्शौ रूपं रसगन्धौ चेति भूतसूक्ष्माणि ।**
**व्यापकमाद्यं व्याप्यं तूत्तरमेव क्रमेण पञ्चदश ॥१५॥**
**पञ्चदशाक्षररूपा नित्या चैषा हि भौतिकाभिमता ।**
**नित्याशशब्दादिगुणप्रभेदभिन्नास्तथानया व्याप्ताः ॥१६॥**
**नित्यास्तिथ्याकाराः तिथयशिशवशक्तिसमरसाकाराः ।**
**दिवसनिशामय्यस्ताः श्रीवर्णास्तेऽपि तद्द्वयीरूपाः ॥१७॥**

**•श्रीविद्याप्रकाश•**

**शब्द, स्पर्श, रूप, रस, गन्ध हुन् गुण भूतका ॥**
**हुनाले सूक्ष्म गुण यी व्याप्त छन् सब तत्त्वमा ।**
**आकाशमा शब्द यौटा, वायुमा शब्द स्पर्श छन् ॥**
**तेजमा उक्त गुण र लिएर रूप तीन छन् ।**
**जलमा ती तीन लिई भए चार रसै समेत् ॥**
**तिनमा गन्ध थपिई पृथ्वीमा पाँच छन् गुण ।**
**समष्टि पन्ध्र गुण भै देवी पञ्चदशी भइन् ॥**
**गनेर प्रतिपद्‌देखि पूर्णिमासम्म पन्ध्र जो ।**
**तिथिका जो अधिष्ठात्री नित्या पनि त पन्ध्र नै ॥**
**ती पनि हुन् पन्ध्र रूप देवीका दिव्य विग्रह ।**
**शिवशक्तिसामरस्य देवीका रूप हुन् तिथि ॥**
**त्यसरी नै दिन-शिव रात-शक्ति स्वरूप हुन् ।**
**मिलेर दिन औ रात यौटी नित्या तिथि भइन् ॥**
**पञ्चदशाक्षरीविद्या त्यसका हरअक्षर ।**
**शिवशक्तिस्वरूपै हुन् छैनन् भिन्न कुनै पनि ॥**

**•गार्ग्यायणी•**

शब्द, स्पर्श, रूप, रस र गन्ध यी पञ्चतन्मात्रास्वरूप सूक्ष्म भूत क्रमशः आकाश, वायु, तेज, जल र पृथ्वीका गुण हुन् । आकाश आदि पञ्चमहाभूतमा अगाडिका महाभूतहरू व्यापक तथा पछाडिका महाभूतहरू व्याप्य हुन् । उदाहरणका लागि आकाश तत्त्व आकाश,वायु, तेज, जल र पृथ्वी सबैमा व्याप्त छ तर आकाशमा अन्य महाभूतहरू छैनन् त्यसैले आकाश व्यापक छ भने अन्य महाभूतहरू आकाशका तुलनामा व्याप्य छन् । वायु तत्त्व वायु,तेज, जल तथा पृथ्वीमा व्याप्त छ तर वायुमा तेज, जल र पृथ्वी तत्त्व छैनन् त्यसैले वायु तेज, जल र पृथ्वीको तुलनामा व्यापक छ भने आकाशका तुलनामा व्याप्य छ । त्यसैगरी तेज तत्त्व तेज,जल तथा पृथ्वीमा व्याप्त छ त्यसैले जल र पृथ्वीको तुलनामा तेज व्यापक छ तर आकाश र वायुमा तेजको अभाव हुने भएकाले आकाश र वायुको तुलनामा तेज व्याप्य छ । जल तत्त्व जल र पृथ्वीमा व्याप्त छ त्यसैले पृथ्वीको तुलनामा जल व्यापक छ तर आकाश, वायु र तेजमा जल तत्त्वको अभाव हुने भएकाले ती तत्त्वको तुलनामा जल व्याप्य छ । पृथ्वी तत्त्व आकाश, वायु, तेज र जल तत्त्वमा नरहने भएकाले पृथ्वी अन्य सबै महाभूतको तुलनामा व्याप्य छ । यसबाट के निष्कर्ष निस्कन्छ भने व्यापक भूतका गुण व्याप्य भूतमा रहन्छन् त्यसैले आकाशको गुणका रूपमा रहेको शब्द पाँचै महाभूतमा रहने भएकाले शब्दको संख्या हुन्छ –५, वायुको गुणभूत स्पर्श आकाश बाहेक अन्य महाभूतमा रहने भएकाले स्पर्शको संख्या हुन्छ –४, तेजको गुणका रूपमा रहेको रूप आकाश र वायुबाहेक अन्य महाभूतमा रहने भएकाले रूपको संख्या हुन्छ –३, जलको गुणभूत रस जल र पृथ्वीमा मात्र रहने भएकाले रसको संख्या हुन्छ –२ र पृथ्वीको गुणभूत गन्ध पृथ्वीमा मात्र रहने भएकाले गन्धको संख्या हुन्छ –१ । यसप्रकार गुणहरूको जम्मा संख्या पन्ध्र भएझैँ त्रिपुराविद्यामा पनि वाग्भवबीजमा पाँच अक्षर (क ए ई ल ह्रीँ ), कामराजबीजमा छ अक्षर (ह स क ह ल ह्रीँ ) र शक्तिबीजमा चार अक्षर (स क ल ह्रीँ ) गरी पन्ध्र अक्षर छन्[१७] । अतः पञ्चमहाभूतका पन्ध्र गुण र पञ्चदशीविद्याका पन्ध्र अक्षरमा कुनै भिन्नता छैन[१८] । त्रिपुराविद्यामा निहित पन्ध्र अक्षर त्रिपुरसुन्दरीदेवीका पन्ध्र तिथिस्वरूप नित्या हुन् । त्रिपुरसुन्दरीदेवीका पन्ध्र नित्याहरू यसप्रकार छन् – १) कामेश्वरी, २) भगमालिनी, ३) नित्यक्लिन्ना, ४) भेरुण्डा, ५) वह्निवासिनी, ६) महाविद्येश्वरी, ७) दूती, ८) त्वरिता, ९) कुलसुन्दरी, १०) नित्या, ११) नीलपताका, १२) विजया, १३) सर्वमङ्गला, १४) ज्वालामालिनी र १५) चित्रा । यी पन्ध्र नित्याहरू प्रतिपदादेखि पूर्णिमासम्म पन्ध्र तिथिहरूका अधिष्ठात्री देवीहरू हुन् भने ती सबैको समष्टिस्वरूप महात्रिपुरसुन्दरी षोडशी अमाकलास्वरूप महानित्या हुन् । दिन र रातले युक्त यी तिथिहरू शिवशक्तिसमरसाकार छन् किनभने दिन प्रकाशको द्योतक हो भने रात विमर्शको द्योतक । अतः श्रीविद्याका तिथिस्वरूप पन्ध्र अक्षरहरू पनि प्रकाशविमर्शमय शिवशक्तिसमरसाकार छन् ॥१५–१७॥



**अव्यञ्जनबिन्दुत्रयसमष्टिभेदैर्विभाविताकारा ।**
**षट्त्रिंशत्तत्त्वात्मा तत्त्वातीता च केवला विद्या ॥१८॥**
**विद्यापि तादृगात्मा सूक्ष्मा सा त्रिपुरसुन्दरी देवी ।**
**विद्यावेद्यात्मकयोरत्यन्ताभेदमानन्त्यार्याः ॥१९॥**

---

१७. व्याप्ताः पञ्चदशार्णैः सा विद्या भूतगुणात्मिका ।
पञ्चभिश्च तथा षड्भिश्चतुर्भिरपि चाक्षरैः ॥

योगिनीहृदयम्, २।३२॥

१८. गुणाः पञ्चदशी प्रोक्ता भूतानां तन्मयी शिवा ।

योगिनीहृदयम्, १।३०॥

**•श्रीविद्याप्रकाश•**

**विद्या पञ्चदशी बन्ने स्वरव्यञ्जनबिन्दुले ।**
**वर्ण छत्तीस मानिन्छन् छत्तीस तत्त्व लोकमा ॥**
**समष्टि यिनकै रूप देवीको दिव्यविग्रह ।**
**तत्त्वात्मा= तत्त्वरूपी सगुण रूपतात्त्विक ॥**
**भए तापनि यो रूप तत्त्वातीत पनि उनै ।**
**तत्त्वोत्तीर्ण भनिन्छिन् ती सुन्दरी एउटै तिनै ॥**
**त्रिपुरसुन्दरीदेवी सूक्ष्म विद्या सबै उनै ।**
**कुनै भेद छँदै छैन विद्या र वेद्यमा पनि ॥**
**मन्त्र औ देवता यौटै दुईमा भेद के छ र ?**
**जगत्प्रपञ्च यो जो छ सुन्दरीकै स्वरूप हो ॥**

**•गार्ग्यायणी•**

श्रीविद्या स्वर, व्यञ्जन र बिन्दुत्रयको व्यष्टि भेदले छत्तीस तत्त्वले युक्त विश्वमय रूपमा तथा स्वर, व्यञ्जन र बिन्दुत्रयको समष्टि भेदले तत्त्वातीत विश्वोत्तीर्ण स्वरूपवाला बन्दछ । श्रीविद्याको प्रथम वाग्भवबीजमा चार अकार र ईकार सहित पाँच स्वर तथा छ व्यञ्जन गरी एघार वर्ण छन् । दोस्रो कामराजबीजमा पाँच अकार र ईकार सहित छ स्वर तथा सात व्यञ्जन गरी जम्मा तेह्र वर्ण छन् । तेस्रो शक्तिबीजमा तीन अकार र ईकार सहित चार स्वर तथा पाँच व्यञ्जन गरी जम्मा नौ वर्ण छन् । यसप्रकार श्रीविद्यामा रहेका स्वर र व्यञ्जनको कूल संख्या तेत्तीस हुन जान्छ । तीनै वटा बीजको अन्त्यमा एकएकवटा बिन्दु छन् । यसप्रकार तीनै वटा बीजमा रहेका स्वर, व्यञ्जन र बिन्दु समेत गर्दा वर्णहरूको जम्मा योग छत्तीस हुन्छ । यसप्रकार स्वर, व्यञ्जन र तीनवटा बिन्दुको व्यष्टि भेदले श्रीविद्या छत्तीस वर्णरूप छत्तीस तत्त्वहरूलाई अवयव बनाएर विश्वमय स्वरूप धारण गर्दछ भने स्वर, व्यञ्जन र तीनवटा बिन्दुको समष्टि भेदस्वरूप सैंतीसौं तत्त्वका रूपमा सम्पूर्ण छत्तीस तत्त्वमय विश्वप्रपञ्चदेखि माथि रहेर तत्त्वातीत विश्वोत्तीर्ण स्वरूप धारण गर्दछ[१९] ।

[१९] स्वरव्यञ्जभेदेन सप्तत्रिंशत्प्रभेदिनी ।
सप्तत्रिंशत्प्रभेदेन षट्त्रिंशत्तत्त्वरूपिणी ॥
तत्त्वातीतस्वभावा च विद्यैषा भाव्यते सदा ।
– योगिनीहृदयम्, २।३३—३४॥



अनुत्तर परम शिव आफ्नो स्वातन्त्र्यले जगत्रूपी प्रपञ्च सृष्टि गर्नका लागि जब स्पन्दनशील हुन्छ तब सोही स्पन्दन व्यापारलाई नै **शिव** तत्त्वका नामले जानिन्छ । उक्त अनुत्तर तत्त्वको स्वातन्त्र्यशक्ति शिवका साथ अभिन्न सम्बन्धले रहेको हुन्छ । त्यसैलाई **शक्ति** तत्त्व भनिन्छ । सोही शक्तितत्त्वले नै आफूभित्र बीजरूपमा अवस्थित सम्पूर्ण चराचर जगत्लाई बाहिर प्रकट गर्ने काम गर्दछ । आफ्नो स्वातन्त्र्यशक्तिका माध्यमबाट बाहिर प्रकट भएको चराचर जगत्लाई अहं स्वरूप मान्दै अर्थात् आफूदेखि अभिन्न रूपमा ग्रहण गर्दै सबैलाई अनुग्रह गर्नमा तत्पर तत्त्वलाई **सदाशिव** भनिन्छ । सम्पूर्ण जगत्लाई इदं स्वरूप मान्दै आफूदेखि भिन्न रूपमा ग्रहण गर्ने तत्त्वलाई **ईश्वर** भनिन्छ । अहं र इदंका बीच अभेद दृष्टि जगाउने तत्त्वलाई **शुद्धविद्या** भनिन्छ । समस्त प्राणीहरूमा भेदबुद्धि उत्पन्न गर्ने तत्त्वलाई **माया** भनिन्छ । मायाका कारण नै अपरिमित शिवका सर्वज्ञत्वादि शक्तिहरू सङ्कुचित भएर शिव परिमित प्रमाता अर्थात् पुरुषरूप ग्रहण गर्न पुग्छ । परम शिवको सर्वकर्तृत्वलाई सङ्कुचित बनाएर किञ्चित्कर्तृत्वका रूपमा कलन (सीमित) गर्ने तत्त्वलाई **कला** भनिन्छ । शिवको सर्वज्ञत्व शक्तिलाई सङ्कुचित बनाउने तत्त्वलाई **विद्या** भनिन्छ । शिवको नित्य परिपूर्ण तृप्त निरभिलाष स्वरूपलाई सङ्कुचित बनाएर सीमित विषयभोगमा लगाउने तत्त्वलाई **राग** भनिन्छ । कालातीत नित्य परम शिवलाई सङ्कुचित बनाएर उसलाई समयको सीमामा बाँध्ने तत्त्वलाई **काल** भनिन्छ । परम शिवको स्वातन्त्र्यशक्तिलाई नियमन गर्ने तत्त्वलाई **नियति** भनिन्छ । नियतिका कारण नै पुरुष शुभ र अशुभ वासनात्मक कर्मको चक्करमा फस्दछ । यसप्रकार शिव नै जब मायाका कला, विद्या, राग, काल र नियतिरूप पञ्चकञ्चुकबाट घेरिएर परिमित प्रमाता बन्न पुग्छ तब उसैलाई **पुरुष** तत्त्वका नामले चिनिन्छ । विश्वप्रपञ्चको विकासका क्रममा इच्छा, ज्ञान र क्रिया शक्तिलाई आफूभित्र अन्तर्लीन गरेर रहेको शान्ता शक्ति जब सङ्कुचित बन्न पुग्छ तब सङ्कुचित इच्छा, ज्ञान र क्रियाशक्ति सत्व, रज र तम गुणका रूपमा तथा स्वयं सङ्कुचित शान्ता शक्ति सत्व, रज र तम गुणको साम्यावस्थास्वरूप **प्रकृति** तत्त्वका रूपमा परिणत हुन पुग्छ । इच्छाशक्तिको सङ्कुचितस्वरूप रज गुण, ज्ञानशक्तिको सङ्कुचितस्वरूप सत्व गुण र क्रियाशक्तिको सङ्कुचितस्वरूप तम गुण हो । प्राकृतसृष्टिका क्रममा जब प्रकृति सृष्टिका प्रति उन्मुख हुन्छ तब उसको साम्यावस्था भङ्ग हुन्छ र त्यसले चित्तको स्वरूप धारण गर्दछ । सत्व, रज र तम गुणको साम्यावस्था भङ्ग हुने बित्तिकै सत्व गुणको अधिकता एवं रज र तम गुणको न्यूनता हुँदा **बुद्धि** तत्त्वको आविर्भाव हुन्छ । बुद्धि तत्त्वबाट

**अहङ्कार** तत्त्वको आविर्भाव हुन्छ। अहङ्कार तत्त्व सात्विक, राजस र तामस भेदले तीन प्रकारको हुन्छ। राजस अहङ्कारबाट **मन**को उत्पत्ति हुन्छ। सात्विक अहङ्कारबाट **पाँच ज्ञानेन्द्रिय** र **पाँच कर्मेन्द्रिय**को उत्पत्ति हुन्छ भने तामस अहङ्कारबाट **पञ्चतन्मात्रा**को उत्पत्ति हुन्छ। पञ्चतन्मात्राबाट **पञ्चमहाभूत**को उत्पत्ति हुन्छ ।

विद्या र वेद्यमा अभिन्नता रहन्छ[२०] । अतः श्रीविद्या छत्तीस तत्त्वमय एवं तत्त्वातीत भएझैं सोही विद्याका माध्यमबाट साक्षात्कार गर्न सकिने श्रीविद्याधिष्ठात्री भगवती महात्रिपुरसुन्दरी पनि सम्पूर्ण छत्तीस तत्त्वमा व्याप्त भएर विश्वमय रूपमा तथा तत्त्वातीत विश्वोत्तीर्ण स्वरूपमा रहेकी छिन् ॥१८–१९॥

**यासान्तरोहरूपा परा महेशी त्रिभाविताकारा ।**
**स्पष्टा पश्यन्त्यादि त्रिमातृकात्मा च चक्रतां याता ॥२०॥**
**चक्रस्यापि महेश्या न भेदलेशोऽपि भाव्यते विबुधैः।**
**अनयोस्सूक्ष्माकारा परैव सा स्थूलयोश्च कापि भिदा ॥२१॥**

**•श्रीविद्याप्रकाश•**

**सकिन्नन् जान्न श्रीदेवी मन वचन कर्मले ।**
**अन्तःकरणमा मात्र नादका रूपमा उनी ॥**
**योगीले योगद्वारा नै थाहा पाउन सक्तछन् ।**
**परा नै रूप हो उनको इन्द्रियागम्य छिन् उनी ॥**
**पश्यन्ती, मध्यमा फेरि वैखरीरूपले परा ।**
**लोकमा व्यक्त ती हुन्छिन् त्रिमाता नामले उनी ॥**
**श्रीचक्र पनि ता उन्कै साक्षाद् व्यक्तस्वरूप हो ।**
**देवताचक्रमा भेद छँदै छैन कुनै पनि ॥**
**श्रीचक्र त्रिपुरादेवी दुवैको रूप सूक्ष्म छ ।**
**कतै भेद छँदै छैन दुवैको स्थूलमा पनि ॥**
**वाक्- अर्थ शक्ति-शिव हुन् अभिन्न पहिले थिए ।**
**उनको यो परारूप जसमा पूर्ण विश्व छ ॥**
**यही परा पछि हुन्छ पश्यन्ती मध्यमा अनि ।**
**वैखरी अरुले व्यक्त विश्वब्रह्माण्ड बन्दछ ॥**

---

[२०] विद्यादैवतयोरपि न भेदलेशोऽस्ति वेद्यवेदकयोः ॥
– कामकलाविलास, ११ ।



**•गार्ग्यायणी•**

पराशक्ति महात्रिपुरसुन्दरी सम्पूर्ण जगत्को कारणस्वरूप अर्थात् शिवदेखि पृथ्वीसम्मका सम्पूर्ण तत्त्वसमूहको आविर्भावभूमि हुन् । यिनी शैव तथा शाक्त परम्परामा योगको उत्तम अङ्ग मानिएको विशिष्ट तर्कका माध्यमबाट साक्षात्कार गर्न सकिने स्वभावकी छिन्। यस्ती पराशक्ति पश्यन्ती, मध्यमा र वैखरी रूपले मातृकात्रयस्वरूपकी छिन्। यिनै परामातृकास्वरूप त्रिपुरसुन्दरी आफ्नो स्फुरत्तालाई हेर्न चाहँदा श्रीचक्रको रूपमा परिणत हुन्छिन् । अतः श्रीचक्र र त्रिपुरसुन्दरीबीच अभिन्नता रहेको छ[२१] ॥२०–२१॥

**मध्ये चक्रस्य स्यात् परामयं बिन्दुतत्त्वमेवेदम् ।**
**उच्छूनं तच्च यदा त्रिकोणरूपेण परिणतं स्पष्टम् ॥२२॥**
**एतत्पश्यन्त्यादित्रितयनिदानं त्रिबीजरूपं च ।**
**वामा ज्येष्ठा रौद्री चाम्बिकयानुत्तरांशभूताः स्युः ॥२३॥**

**•श्रीविद्याप्रकाश•**

**श्रीचक्र बीचको बिन्दु महात्रिपुरसुन्दरी ।**
**उनी नै हुन् पराशक्ति श्रीचक्रनायिका परा ॥**
**उच्छून भै त्यही बिन्दु फुली त्रिबिन्दु बन्दछ ।**
**इच्छाशक्ति एक बिन्दु वामाको रूप हो अनि ॥**
**दोस्रो बिन्दु ज्ञानशक्ति ज्येष्ठाको रूप बन्दछ ।**
**तेस्रो बिन्दु क्रियाशक्ति रौद्रीको रूप सुन्दर ॥**
**पश्यन्ती मध्यमा फेरि वैखरी पनि हुन् तिनै ।**
**जोडिँदा तीन यी बिन्दु त्रिकोण रूप बन्दछ ॥**
**अनुत्तराऽऽनन्द इच्छा श्रृङ्गाटरूप बन्दछ ।**
**यही हो विश्वको योनि आनन्दकेन्द्र हो यही ॥**
**विकास विश्वको हुन्छ यसैबाट यही परा ।**

---

[२१] चक्रं विद्याक्षरैरेव जननात् तदभेदवत् ।
देव्या रूपान्तरत्वाच्च तेन युक्तोक्तरूपता ॥
–वरिवस्यारहस्यम्, २।९६॥

**•गार्ग्यायणी•**

श्रीचक्रको माझमा रहेको बिन्दु प्रकाशस्वरूप अकार र विसर्गस्वरूप हकारको समष्टि बिन्दु हो । अकार प्रकाशस्वरूप शिवको वाचक हो भने हकार विमर्शस्वरूप शक्तिको वाचक हो[२२] । त्यसैले उक्त बिन्दु शिव र शक्तिको सामरस्यको द्योतक हो । परावाणीको प्रतीकस्वरूप उक्त बिन्दुमा पश्यन्ती, मध्यमा र वैखरी नामक तीनै वाणीहरू अन्तर्लीन अवस्थामा रहेका हुन्छन् । परम शिव वा पराशक्ति जब आफ्नो स्फुरत्ता वा विश्वसर्जनरूप लीलालाई अवलोकन गर्न चाहन्छन् तब उक्त अहंस्वरूप बिन्दुमा स्पन्दन (vibration) देखापर्दछ र त्यसबाट अग्नीषोमात्मक कामबिन्दुको आविर्भाव हुन्छ । जसरी एउटा तरङ्गबाट अर्को तरङ्ग बन्दछ त्यसरी नै अहंस्वरूप बिन्दुमा आएको स्पन्दनबाट कामबिन्दु अनि कामबिन्दुमा आएको स्पन्दनबाट शुक्ल एवं रक्तबिन्दुस्वरूप अग्नि र सोम नामक कलाको आविर्भाव हुन्छ । यसप्रकार पराशक्तिमय बिन्दु नै विश्वविकासका क्रममा मातृत्रयात्मक बैन्दवचक्र (त्रिकोणचक्र) का रूपमा परिणत हुन्छ[२३] । यो त्रिकोणचक्र पश्यन्ती, मध्यमा र वैखरीवाणी एवं वामा, ज्येष्ठा र रौद्रीशक्तिको प्रतीक हो । त्रिकोणचक्रको मध्यमा रहेको बिन्दु इच्छा, ज्ञान र क्रियाको समष्टिस्वरूप शान्ता तथा वामा, ज्येष्ठा र रौद्रीको समष्टिस्वरूप अम्बिकाशक्तिको प्रतीक हो । अम्बिका, वामा, ज्येष्ठा र रौद्रीशक्तिलाई प्रकाशको अंश मानिन्छ भने शान्ता, इच्छा, ज्ञान र क्रियाशक्तिलाई विमर्शको अंश मानिन्छ[२४] । प्रकाश र विमर्शको सामरस्यस्वरूप परमा कला जब विश्वका रूपमा उल्लसित हुन चाहन्छ तब सर्वप्रथम प्रकाशको अंशभूत अम्बिका र विमर्शको अंशभूत शान्ताको मिलनबाट परावाणीको रूप धारण गर्दछ । परावाणी आफूमा बीजरूपमा अवस्थित विश्वलाई जब बाहिर प्रकट गर्न थाल्दछ तब विश्वलाई वमन गर्ने

---

२२. अकारः सर्ववर्णाग्र्यः प्रकाशः परमः शिवः ।
हकारोऽन्त्यः कलारूपो विमर्शाख्यः प्रकीर्तितः ॥

–विज्ञानभैरवः ।

२३. प्रकाशपरमार्थत्वात् स्फुरत्तालहरीयुतात् ।
प्रसृतं विश्वलहरीस्थानं मातृत्रयात्मकम् ॥
बैन्दवं चक्रं..................................।

– योगिनीहृदयम् १।११ ।

२४. हेर्नुहोस्, योगिनीहृदय, दीपिका, पृ. ३२ ।



भएकाले अङ्कुशाकार वामाशक्तिको रूप धारण गर्दछ । यही वामाशक्ति नै इच्छाशक्तिका साथ संयुक्त भएर पश्यन्तीवाणीका रूपमा परिणत हुन्छ । त्यसैगरी ज्येष्ठाशक्ति र ज्ञानशक्ति संयुक्त हुँदा मध्यमावाणी तथा रौद्रीशक्ति र क्रियाशक्ति संयुक्त हुँदा वैखरीवाणीको आविर्भाव हुन्छ । यो त्रिकोणचक्र श्रीविद्याका वाग्भव, कामराज र शक्तिबीजरूप तीन बीजस्वरूप; कामरूप, पूर्णगिरि र जालन्धररूप तीन पीठस्वरूप; स्वयम्भू, बाण र इतररूप तीन लिङ्गस्वरूप र चन्द्र, सूर्य र अग्निरूप तीन धामस्वरूप रहेको छ ॥२२–२३॥

**इच्छाज्ञानक्रियाशान्ताश्चैताश्चोत्तरावयवाः ।**
**व्यस्ताव्यस्ततदर्णद्वयमिदमेकादशात्म पश्यन्ती ॥२४॥**

**•श्रीविद्याप्रकाश•**

**श्रीचक्रको मध्यबिन्दु पराशक्ति फुलेपछि ।**
**विकासोन्मुख भै तीन बिन्दु हुन्छन् त्रिशक्ति नै ॥**
**ती जोडिए एकअर्का रेखाले योनि बन्दछ ।**
**श्रीचक्रका नव योनि नवशक्ति प्रतीकका ॥**
**फर्केका माथि छन् चार तल उन्मुख पाँच छन् ।**
**इच्छा, ज्ञान, क्रिया, शान्ता फर्केका माथि चार छन् ॥**
**वामा, ज्येष्ठा अनि रौद्री, अम्बिका र परा यिनी ।**
**पाँच जोडेर नौ शक्ति नवयोनिस्वरूप छन् ॥**
**नवयोनिरूप चक्र महात्रिपुरसुन्दरी ।**
**व्यक्त स्वरूप देवीको विश्वब्रह्माण्डरूप हो ॥**
**इच्छा, ज्ञान, क्रिया, शान्ता फर्केका माथि चार यी ।**
**वामा, ज्येष्ठा अनि रौद्री, अम्बिका र परा गरी ॥**
**नौ यी र मध्यकी मुख्य दश शक्ति यी व्यष्टि हुन् ।**
**समष्टि एक जोडेर एघार देवीरूप छन् ॥**

**•गार्ग्यायणी•**

यो त्रिकोणचक्र फेरि सृष्टिक्रमले पाँचवटा शक्तिचक्रको र लयक्रमले चारवटा वह्निचक्र (शिवचक्र)को रूप धारण गरेर नवशक्तिस्वरूप

नवयोनिचक्र बन्दछ[२५] । स्वाभिमुखाग्र त्रिकोणलाई शक्तिचक्र र पराङ्मुखाग्र (ऊर्ध्वमुखाग्र) त्रिकोणलाई वह्निचक्र (शिवचक्र) भनिन्छ । श्रीचक्रमा रहेका चार वह्निचक्रहरू इच्छाशक्ति, ज्ञानशक्ति, क्रियाशक्ति र शान्ताशक्तिका प्रतीक हुन् भने पाँचवटा शक्तिचक्रहरू वामा, ज्येष्ठा, रौद्री, अम्बिका र पराशक्तिका प्रतीक हुन् । चारवटा वह्निचक्र, पाँचवटा शक्तिचक्र र मध्यबिन्दु गरी दशवटा शक्ति त्रिपुरसुन्दरीका अवयवरूप व्यष्टिस्वरूप हुन् भने एघारौं समष्टिस्वरूप भगवती महात्रिपुरसुन्दरी हुन् ॥२४॥

**एवं कामकलात्मा त्रिबिन्दुतत्त्वस्वरूपवर्णमयी ।**
**सेयं त्रिकोणरूपं याता त्रिगुणस्वरूपिणी माता ॥२५॥**

**•श्रीविद्याप्रकाश•**

**शिव-काम, कला-शक्ति प्रकाश र विमर्श हुन् ।**
**यौटै भए पनि फेरि तीन बिन्दु बने यिनी ॥**
**अ देखि ह मिली बन्ने अहन्ताको स्वरूप यो ।**
**यसैभित्र सबै वर्ण विश्वब्रह्माण्डद्योतक ॥**
**त्रिबिन्दु जोडिई बन्छ त्रिकोण विश्वयोनि त्यो ।**
**त्रिगुण तीन जोजो छन् यसमा नै विलीन छन् ॥**
**तीनै गुणमयी आमा महात्रिपुरसुन्दरी ।**
**तीन बिन्दु, तीन बीज, तीनकोण स्वरूपकी ॥**

**•गार्ग्यायणी•**

प्रकाशस्वरूप अकार तथा विमर्शस्वरूप हकारको संयोगबाट बन्ने अहं नै कामकलाक्षर हो जो स्वाभाविक परिपूर्णताको द्योतक हो । यो अहंस्वरूप कामकलाक्षर प्रकाशरूप शुक्ल बिन्दु, विमर्शरूप रक्त बिन्दु र ती दुवैको संयोगबाट बन्ने मिश्र बिन्दुको सामरस्यस्वरूप छ । त्यही कामकलाक्षररूप पराशक्ति नै वाग्भव, कामराज र शक्तिबीजरूप बीजत्रय; इच्छा, ज्ञान

[२५] तच्छक्तिपञ्चकं सृष्ट्या लयेनाग्निचतुष्टयम् ।
पञ्चशक्तिचतुर्वह्निसंयोगाच्चक्रसंभवः ॥
– योगिनीहृदयम्, १।८॥



र क्रियाशक्तिरूप शक्तित्रय र त्यसैको सङ्कुचित सत्व, रज र तमरूप गुणत्रयको प्रतीकस्वरूप त्रिकोणचक्रका रूपमा परिणत हुन्छ । यो त्रिकोणचक्र पश्यन्ती, मध्यमा र वैखरीवाणीको प्रतिनिधि हो किनभने यस त्रिकोणचक्रको प्रसार परमात्मस्वरूप सदाशिव नामक तुरीय समष्टिबिन्दुबाट भएको हो जुन समष्टिबिन्दु परावाणीको प्रतिनिधि हो । महाबिन्दुस्वरूप प्रथम चक्रबाट नै त्रिकोणचक्रको प्रसार भएकाले यस त्रिकोणचक्रलाई पनि बैन्दवचक्र नै भनिन्छ । वस्तुतः श्रीचक्र कामकलाको नै विस्तार हो[२६] ॥२५॥

**एका परा तदन्या,वामादिव्यष्टिमातृसृष्टचात्मा ।**
**तेन नवात्मा जाता, माता सा मध्यमाभिधानाभ्याम् ॥२६॥**

**•श्रीविद्याप्रकाश•**

**पराकै रूप पश्यन्ती, मध्यमा अनि वैखरी ।**
**यही स्वरूप श्रीचक्र नौ योनि नौ त्रिकोण हो ॥**
**जगत्‌लाई वमन् गर्ने वामा शक्ति भइन् अनि ।**
**कल्याणकारिणी ज्येष्ठा साक्षात् शिवमयी भइन् ॥**
**विश्वरोग नाश गर्ने रौद्री शक्ति भइन् पुनः ।**
**आफैँ स्फुरण सदा गर्ने अम्बिका परमा कला ॥**
**परा मिली पाँच शक्ति इच्छादि चार अन्य जो ।**
**सबै मिली नवात्मा छन् देवी श्रीचक्ररूपिणी ॥**
**वामा आदि सृष्टि गर्न पश्यन्ती भै परा उठिन् ।**
**प्रपञ्चको विकासार्थ मध्यमा उनी नै भइन् ॥**

**•गार्ग्यायणी•**

पराशक्तिस्वरूप मध्यबिन्दु नै विकास वा विस्तारका क्रममा त्रिकोणचक्र र नवयोनिचक्रका रूपमा परिणत हुन्छ । शिवशक्तिसामरस्यस्वरूप उक्त महाबिन्दुमय मध्यचक्रको प्रथम विकास त्रिकोणचक्र हो भने सोही त्रिकोणचक्रको तीनवटा स्पन्दनबाट नवशक्तिस्वरूप नवयोनिचक्रको

[२६] चक्रं कामकलारूपं प्रसारपरमार्थतः ।
– योगिनीहृदयम्, १।२४॥

आविर्भाव हुन्छ । श्रीचक्रको मध्यबिन्दु पराशक्तिस्वरूप हो भने त्रिकोणचक्र र नवयोनिचक्र पश्यन्तीस्वरूप हो किनभने आफ्नो विस्तारका क्रममा पराशक्ति नै पश्यन्ती स्वरूप ग्रहण गर्दै त्रिकोणचक्र र नवयोनिचक्रको रूपमा परिणत भएको हो । अतः तिनै पराशक्ति वामा, ज्येष्ठा, रौद्री, अम्बिका, पश्यन्ती, इच्छा, ज्ञान, क्रिया र शान्तास्वरूप नवशक्तिको जननी पश्यन्ती नामले चिनिन्छ[२७] । आफूभित्र अन्तर्लीन अवस्थामा रहेको जगत्‌लाई बाहिर वमन गर्ने भएकाले विश्वकी जननीशक्तिलाई वामा भनिन्छ । सबैलाई मङ्गल गर्ने शक्ति ज्येष्ठा हो भने संसाररूपी रोगलाई नाश गर्ने शक्ति रौद्री हो । सृजनोन्मुख महासत्तालाई अम्बिका भनिन्छ । जब मातृत्रयात्मक परमाकला आफूलाई विस्तारित गर्न वा वाह्य रूपमा आफूलाई प्रकट गर्न चाहन्छ तब अम्बिकारूप धारण गर्दछ, यसैलाई परावाणी भनिन्छ[२८] । परावाणी कुण्डलिनीस्वरूप भएकाले यसको स्थिति मूलाधारचक्रमा रहेको छ । परावाणीको प्रथम विकास पश्यन्ती नामक वाणी हो । प्रकाशको अंशबाट उद्‌भूत वामाशक्ति र विमर्शको अंशबाट उद्‌भूत इच्छाशक्तिको मिलनबाट पश्यन्तीवाणीको उदय हुन्छ । परावाणी नै जब आफ्नो स्वातन्त्र्यले बाहिर उल्लसित हुन चाहन्छ तब सोही इच्छाका कारण परावाणीमा आउने किञ्चित् स्पन्दनात्मक अवस्थालाई नै पश्यन्तीवाणीका नामले चिनिन्छ । पश्यन्तीवाणीको स्थिति नाभिस्थित मणिपूर नामक चक्रमा रहेको छ ॥२६॥

**द्विविधा हि मध्यमा सा सूक्ष्मा स्थूलाकृतिस्थिता सूक्ष्मा ।**
**नवनादमयी स्थूला नववर्गात्मा च भूतलिप्याख्या ॥२७॥**

**•श्रीविद्याप्रकाश•**

**मध्यमाका दुई भेद सूक्ष्मा योगले जानिने ।**
**त्यसैको अनुभव गर्छन् योगीले नै समाधिमा ॥**

२७. परा विकासभूता पश्यन्ती वामादिव्यष्टिमातृसृष्ट्यात्मावामादिशान्तान्तशक्तिनवकमयी यतस्तेन कारणेन सा माता पश्यन्ती नाम जननी ।
— कामकलाविलास, चिद्वल्लीटीका, कारिका २७ ।

२८. आत्मनः स्फुरणं पश्येत् यदा सा परमा कला ।
अम्बिकारूपमापन्ना परावाक् समुदीरिता ॥
– योगिनीहृदयम्, १।३६॥



**स्थूल आकारमा बस्ने स्थूला आकार देखिने ।**
**नौ वटा नादका रूप योगीले सुन्न सक्तछन् ॥**
**चिणि, चिणि चिणि, घण्टा शङ्ख, तन्त्री र ताल औ ।**
**छ वटा यिनको नाद वेणु, भेरी, मृदङ्गको ॥**
**यी नौ नादमयी सूक्ष्म योगमा व्यक्त बन्दछन् ।**
**यसै गरी वर्णवर्ग नौवटा व्यवहारमा ॥**
**अकचटतपयशल वर्णवर्ग यी हुन् नव ।**
**यिनै स्थूला मध्यमा हुन् जानिने व्यवहारमा ॥**
**यसैलाई भूतलिपि भनिन्छ शास्त्रमा पनि ।**
**अनाहत् चक्रमा जस्को योगीले ज्ञान गर्दछ ॥**

**•गार्ग्यायणी•**

प्रकाशांश ज्येष्ठा र विमर्शांश ज्ञानशक्तिको मिलनबाट मध्यमावाणीको आविर्भाव हुन्छ । पश्यन्तीवाणी नै बाहिर प्रकट हुने क्रममा जब नादको रूप ग्रहण गर्न पुग्छ तब त्यसैलाई मध्यमावाणी भनिन्छ । त्यसैले मध्यमावाणी सूक्ष्ममध्यमा र स्थूलमध्यमा गरी दुई प्रकारको छ । सूक्ष्ममध्यमा नवनादस्वरूप छ भने त्यसैको कार्यस्वरूप स्थूलमध्यमा नौ वर्गले युक्त व्यक्त अक्षरस्वरूप छ । नवनादस्वरूप सूक्ष्ममध्यमाको साक्षात्कार समाधि अवस्थामा रहेको योगीले मात्र गर्न सक्छ । मध्यमावाणी हृदयमा रहेको अनाहतचक्रमा रहन्छ ॥२७॥

**आद्या कारणमन्या कार्यं त्वनयोर्यतस्ततो हेतोः ।**
**सैवेयं न हि भेदः तादात्म्यं हेतुहेतुमतोर्दिष्टम् ॥२८॥**

**•श्रीविद्याप्रकाश•**

**पहिलो कारण सूक्ष्मा हो स्थूला अर्को त कार्य हो ।**
**स्थूल हुन्छ सूक्ष्मबाटै कार्यकारणभाव छ ॥**
**माटोबाट घडा बन्छ यी हुन् कार्य र कारण ।**
**तर यिन्मा भेद छैन माटो नै हो घडा पनि ॥**
**यस्तै स्थूल सूक्ष्मबाट भिन्न छैन छ एकता ।**
**कार्यकारणमा भेद हुँदै हुन्न कसै गरी ॥**

**•गार्ग्यायणी•**

माथि उल्लेख गरिएका सूक्ष्ममध्यमा र स्थूलमध्यमाका बीच कार्यकारणभावसम्बन्ध रहेको छ । सूक्ष्ममध्यमा कारण हो भने स्थूलमध्यमा त्यसको कार्य हो । जसरी कारणस्वरूप माटो र कार्यस्वरूप गाग्रोबीच कुनै तात्त्विक भिन्नता हुँदैन त्यसरी नै सूक्ष्ममध्यमा र स्थूलमध्यमाका बीच पनि कार्यकारणभावसम्बन्ध रहेकाले यी दुईका बीच कुनै भिन्नता छैन ॥२८॥

**शषसपवर्गमयं तद्वसुकोणं मध्यकोणविस्तारः ।**
**नवकोणं मध्यं चेत्यस्मिंश्चिद्दीपदीपिते दशके ॥२९॥**

**•श्रीविद्याप्रकाश•**

**शषसपवर्गमय आठ कोण श्रीचक्रको ।**
**मध्यत्रिकोणको नै त्यो विस्तार र विकास हो ॥**
**बिन्दुका साथ दुई ती मिलाई दश कोण नै ।**
**प्रभामण्डल हो देवी त्रिपुरा चितिरूपकी ॥**
**त्रिपुरसुन्दरी देवी बस्छिन् बैन्दवचक्रमा ।**
**ज्योतिर्मयी चित्स्वरूपा उनको वास्तव रूप हो ॥**
**फैलिएको छ त्यो ज्योति प्रभामण्डलरूपमा ।**
**नवकोण त्यही नै हो मध्य र अष्टकोण नै ॥**

**•गार्ग्यायणी•**

मध्यत्रिकोणचक्रको विस्तारस्वरूप आविर्भूत सर्वरोगहर नामक वसु (अष्ट) कोणचक्रमा श, ष, स एवं पवर्गका पाँच वर्ण गरी जम्मा आठ वर्णको भावना गरिन्छ । मध्यत्रिकोण र त्यसको चारैतिर फैलिएका वसुकोणस्वरूप नवयोनिचक्रमा धर्म, अधर्म, आत्मा, अन्तरात्मा, परमात्मा, ज्ञानात्मा, प्रमाता, प्रमेय र प्रमाण रहेका छन् । मध्यत्रिकोणमा प्रमाणको स्थिति मानिन्छ भने अन्य आठ त्रिकोणमा धर्म आदिको स्थिति मानिन्छ । मध्यत्रिकोण र वसुकोण गरी नवकोण जब शिवशक्तिसामरस्यमय महाबिन्दुस्वरूप बैन्दवचक्रसँग संयुक्त हुन्छ तब दशवटा चक्रको समूह बन्दछ जुन चेतनाधिष्ठात्री त्रिपुरसुन्दरीको प्रभामण्डलद्वारा चम्किएको छ । भगवती त्रिपुरसुन्दरी बैन्दवचक्ररूपी आसनमा बसेकी छिन् तिनकै प्रभामण्डलले बैन्दवचक्र, त्रिकोणचक्र र वसुकोणचक्रको समूह प्रकाशित हुन्छ ॥२९॥



**तच्छाया द्वितयमिदं दशारचक्रद्वयात्मना विततम् ।**
**तटचकवर्गचतुष्टयविलसनविस्पष्टकोणविस्तारम् ॥३०॥**

**•श्रीविद्याप्रकाश•**

**त, ट, च, क वर्गमय दश अक्षरका दुई ।**
**श्रीचक्रमा दुईवटा मानिन्छन् दशकोण नै ॥**
**त्रिपुरसुन्दरीदेवी जो बस्छिन् बिन्दुचक्रमा ।**
**प्रभामण्डल हो उन्को मध्य र अष्टकोण नै ॥**
**प्रभामण्डलकै कान्ति ती दुई दशकोण हुन् ।**
**रक्षा गर्ने सबैको र सिद्धिदायक अन्य हो ॥**
**श्रीचक्रको बीचमा छ बिन्दुको त्यसमा प्रभु ।**
**त्रिपुरसुन्दरीदेवी बस्छिन् श्रीचक्रनायिका ॥**
**चितिरूपा भगवती तेजस्वी अति छिन् उनी ।**
**मध्यकोण आठकोण दुवैका भेदले नव ॥**
**त्रिकोण त्यो बन्छ जो हो प्रभामण्डल उज्ज्वल ।**
**दशकोण दुई अर्का तिनकै कान्ति प्रोज्ज्वल ॥**
**विस्तार बिन्दुको नै हो त्यसपछिका त्रिकोणको ।**
**श्रीचक्रमा अरू चक्र त्यसका नै विकास हुन् ॥**
**स्वरव्यञ्जन जोजो छन् ज्ञानका स्रोत मानिने ।**
**श्रीचक्रका चक्रमा नै समाहित सुव्यक्त छन् ॥**

**•गार्ग्यायणी•**

मध्यत्रिकोण र वसुकोणको बीचमा रहेको मञ्च अर्थात् सदाशिवस्थानीय बैन्दवासन (बैन्दवचक्र)मा विराजमान भगवती त्रिपुरसुन्दरीको प्रभामण्डलको दुईवटा प्रतिबिम्बबाट दुईवटा दशकोणचक्रको आविर्भाव हुन्छ । बैन्दवकोण, मध्यत्रिकोण र वसुकोण संयुक्त हुँदा दशवटा चक्रको समूह बन्दछ र बैन्दवचक्रलाई आसन बनाएर बसेकी त्रिपुरसुन्दरीको ज्योतिले दशवटा चक्रमा प्रतिबिम्ब पर्न गई त्यसबाट अन्तर्दशार र पुनः अन्तर्दशारको प्रतिबिम्बबाट वहिर्दशारचक्रको आविर्भाव हुन्छ । अन्तर्दशारचक्रमा तवर्ग एवं टवर्गका दश वर्णहरू रहेका छन् भने वहिर्दशारचक्रमा कवर्ग एवं

चवर्गका दश वर्णहरू रहेका छन् । योगिनीहृदय नामक ग्रन्थमा चाहिँ सर्वरक्षाकर नामक अन्तर्दशारचक्रमा य,र,ल,व,श,ष,स,ह, ळ, क्ष गरी दशवटा वर्णहरू रहेका छन् भनिएको छ[२९] ॥३०॥

**एतच्चक्रचतुष्कप्रभासमेतं दशारपरिणामः ।**
**आदिस्वरगणगतचतुर्दशवर्णमयं चतुर्दशारमिदम् ॥३१॥**

**•श्रीविद्याप्रकाश•**

**बिन्दु र बीच त्रिकोण, आठकोण, दशद्वय ।**
**यी पाँच चक्रको कान्ति सबैका परिणाम नै ॥**
**चौध त्रिकोणको चक्र, त्यो चौध स्वररूप छ ।**
**यो चौध कोणको जन्म सर्वसौभाग्यदायक ॥**
**यी छ चक्रहरूभित्र स्वरव्यञ्जन पूर्ण छन् ।**
**यिनैका मेलले बन्छ वैखरी शक्ति उत्तम ॥**

**•गार्ग्यायणी•**

बैन्दवचक्र, त्रिकोणचक्र, वसुकोणचक्र र अन्तर्दशारचक्रका चार प्रभा तथा वहिर्दशारचक्रका दश कोण मिलेर सर्वसौभाग्यदायक नामक चतुर्दशारचक्रको आविर्भाव हुन्छ । चतुर्दशारचक्रबाट बैन्दवचक्र, त्रिकोणचक्र, वसुकोणचक्र र अन्तर्दशारचक्रको दूरी टाढा रहेकाले त्यहाँबाट ती चक्रहरूको चार वटा प्रभामात्र देखिन्छ, तिनका अवयवहरू देखिँदैनन् । वहिर्दशारचक्र र चतुर्दशारचक्र भने नजिकै रहेकाले त्यहाँ वहिर्दशारचक्रका दश वटा कोणहरू स्पष्ट देखिन्छन् । यसप्रकार बैन्दवचक्र, त्रिकोणचक्र, वसुकोणचक्र र अन्तर्दशारचक्रका चार प्रभा तथा वहिर्दशारचक्रका दश वटा कोणहरू संयुक्त हुँदा चतुर्दशारचक्रको आविर्भाव हुन्छ । यस चक्रमा अकारादि चौध वटा स्वरवर्णहरू रहेका छन् । योगिनीहृदय नामक ग्रन्थमा चाहिँ चतुर्दशारचक्रमा टकारदेखि लिएर भकारसम्मका चौध वर्णहरू रहेका छन् भनिएको छ[३०] ।

---

२९. शक्त्यादियकारमारभ्य नवानां वर्णानां पर्यन्तगः क्षकारः, तेषां दशानां स्फूर्तिकारकम् । -योगिनीहृदयम्, दीपिका,पृ. २६।

३०. टकारादिभकारान्तवर्णचतुर्दशकप्रकाशविमर्शमयचतुर्दशाररूपेण परिणतम् । – पूर्ववत्, पृ. २९ ।



**परया पश्यन्त्यापि च मध्यमया स्थूलवर्णरूपिण्या ।**
**एताभिरेकपञ्चादशाषरात्मिका वैखरी जाता ॥३२॥**

**•श्रीविद्याप्रकाश•**

**त्रिपुरसुन्दरीदेवी पराशक्ति विकास भै ।**
**पश्यन्ती, मध्यमा बन्छिन् सर्ववर्णस्वरूपिणी ॥**
**यिनैका मेलले बन्छ वैखरी शब्दरूपिणी ।**
**अकारदेखि क्षसम्म जति अक्षर छन् सबै ॥**
**मिली प्रपञ्च जो बन्छ त्यसैको विश्वविग्रह ।**
**त्यही नै वैखरी शक्ति सर्व शब्दात्मिका परा ॥**
**त्रिपुरसुन्दरीदेवी हुन् पराशक्ति उत्तमा ।**
**प्रकाशरूप हो उन्को उनैबाट विमर्श भो ॥**
**सबै नै ज्ञानका राशि उनैमा सूक्ष्म रूपले ।**
**उच्चारण भैरहेका छन् उनै हुन् विश्वकारण ॥**
**उन्कै प्रकाशले विश्व आलोकित निरन्तर ।**
**उन्कै विस्तार यो विश्व उनै कारण-धारण ॥**
**पश्यन्ती उनकै शक्ति मध्यमा अनि वैखरी ।**
**उन्कै प्रभाको कान्तिले प्रकाशित जगत् बन्यो ॥**
**अकारदेखि क्षसम्म सबै अक्षर मेल भै ।**
**शब्द बन्छन् अर्थहेतु यसैले ज्ञान फैलियो ॥**
**यौटा बत्ती झल्ल बल्दा आलोक फैलिएसरि ।**
**प्रकाशबिन्दुले गर्दा आलोकित जगत् बन्यो ॥**
**यौटै बिन्दु बने धेरै तिन्कै मेल भई बने ।**
**धेरै अक्षर त्यस्ले नै शब्दराशि पनि बने ॥**
**भावले अर्थ बुझिए विस्तार ज्ञानको भयो ।**
**पराशक्ति र पश्यन्ती, मध्यमा अनि वैखरी ।**
**यिनैका क्रमले विश्व विस्तार र विकास भो ॥**
**सृष्टि, स्थिति र संहार, तिरोभाव, अनुग्रह ।**
**त्रिपुरसुन्दरी गर्छिन् श्रीचक्र नै प्रतीक हो ॥**

**•गार्ग्यायणी•**

शिवशक्तिसामरस्यमय पराशक्ति नै विश्वविकासका क्रममा वाक् तथा अर्थरूप जागतिक प्रपञ्चको रूप धारण गर्दछ भन्ने कुरा माथि नै उल्लेख भइसकेको छ । पश्यन्ती, मध्यमा तथा वैखरीरूप वाक्शक्तिलाई आफूभित्रै अन्तर्लीन गरेर सूक्ष्म रूपमा रहेको परा वाणी इच्छाशक्ति, ज्ञानशक्ति र क्रियाशक्तिको समष्टिस्वरूप स्वातन्त्र्यशक्ति हो । त्यही परावाणी स्थूल आकार ग्रहण गर्दै जाने क्रममा इच्छाशक्तिरूप पश्यन्तीवाणी, ज्ञानशक्तिरूप मध्यमावाणी र क्रियाशक्तिरूप वैखरीवाणीका रूपमा परिणत हुन्छ । त्यसैले परावाणीकै स्थूलता पश्यन्ती, पश्यन्तीकै स्थूलता मध्यमा र मध्यमाकै स्थूलता वैखरीवाणी हो । यसप्रकार परावाणी नै क्रमशः स्थूलता ग्रहण गर्दै जाने क्रममा सर्वप्रथम पश्यन्तीवाणी, त्यसपछि मध्यमावाणीका रूपमा परिणत हुँदै अन्त्यमा अकारादि क्षकारान्तस्वरूप वैखरीवाणीका रूपमा परिणत हुन्छ ॥३२॥

**कादिभिरष्टभिरुपचितमष्टदलाब्जं च वैखरीवर्गैः ।**
**स्वरगणसमुदितमेतद्द्व्यष्टदलाम्भोरुहं च सञ्चिन्त्यम् ॥३३॥**

**•श्रीविद्याप्रकाश•**

**क आदि वर्गका वर्ण वैखरी वर्गभित्रका ।**
**आठपत्रे कमल हो प्रभामण्डलशोभित ॥**
**त्यसपछिको सोह्रपत्रे कमल स्वरवर्णको ।**
**प्रभामण्डलको कान्ति त्रिपुराको समुज्ज्वल ॥**
**सबै संक्षोभ गर्ने हो कमल आठ पत्रको ।**
**सबै आशा पूर्ण गर्ने कमल सोह्र पत्रको ॥**
**यसैको भावना गर्दै त्रिपुराको उपासना ।**
**श्रीचक्रमा सधैं गर्ने पाउँछन् मुक्ति साधक ॥**

**•गार्ग्यायणी•**

आठवटा कमलपत्रले युक्त सर्वसङ्क्षोभण नामक चक्रमा क,च,ट,त,प,य,श,क्ष वर्णहरूको तथा सोह्रवटा कमलपत्रले युक्त सर्वाशापरिपूरक नामक चक्रमा अकार आदि स्वरवर्णहरूको भावना गर्नुपर्दछ ॥३३॥



**विन्दुत्रयमयतेजस्त्रितयविकारस्थितानि वृत्तानि ।**
**भूबिम्बत्रयमेतत् पश्यन्त्यादित्रिमातृविश्रान्तिः ॥३४॥**

**•श्रीविद्याप्रकाश•**

**त्यसपछिका तीन घेरा चन्द्र, सूर्य र अग्नि हुन् ।**
**रातो, सेतो, मिश्रबिन्दु यिनका तेज हुन् यिनी ॥**
**भू-बिम्ब तीन छन् फेरि पश्यन्ती आदिशक्तिका ।**
**विश्रान्तिभूमि परमा यहीँसम्म विकास छ ॥**
**परा हुन् मूल त्रिपुरा महाशक्तिस्वरूपिणी ।**
**तिन्कै विस्तार पश्यन्ती, मध्यमा अनि वैखरी ॥**
**विश्वविज्ञानको मूल मातृका बीजरूपिणी ।**
**त्रिपुरसुन्दरीदेवी महत्तेजःस्वरूपिणी ॥**
**परामा नै छ जो ज्ञान अव्यक्तरूपले स्थित ।**
**शब्दार्थ भै व्यक्त हुन्छ त्रिशक्ति क्रमले त्यही ॥**
**पश्यन्ती, मध्यमा शक्ति, वैखरी क्रमले परा ।**
**चितिशक्ति व्यक्त हुन्छिन् महात्रिपुरसुन्दरी ॥**

**•गार्ग्यायणी•**

श्रीचक्रमा रहेका तीनवटा वृत्त शिवशक्तिसामरस्यमय महाबिन्दुका रक्त, शुक्ल र मिश्रबिन्दुबाट उद्भूत सोम, सूर्य र अग्निका प्रतीक हुन् । त्यसैगरी श्रीचक्रमा रहेका तीनवटा भूपुरले पश्यन्ती, मध्यमा र वैखरीस्वरूप तीनवटा मातृकाको प्रतिनिधित्व गर्दछन् ॥३४॥

**क्रमणं पदविक्षेपः क्रमोदयस्तेन कथ्यते द्वेधा ।**
**आवरणं गुरुपंक्तिद्वयमिदमम्बा पराम्बुजप्रसरम् ॥३५॥**

**•श्रीविद्याप्रकाश•**

**त्रिपुरसुन्दरीका छन् गति दुई प्रकारका ।**
**पदविक्षेप पहिलो अर्कोचाहिँ क्रमोदय ॥**
**प्रकाशरूपा त्रिपुरा उन्का शक्ति अनन्त छन् ।**

**उनैबाट जन्म लिन्छन् उनैमा लीन बन्दछन् ॥**
**यही हो पदविक्षेप सामर्थ्य दिव्य शक्ति यो ।**
**जोजो शक्ति काम गर्छन् रही देवी वरिपरि ।**
**ती आवरण देवीका विभिन्न चक्रमा स्थित ॥**
**अर्को ता गुरूपंक्ति  हो उनकै ती प्रकाश हुन् ।**
**दिव्य-सिद्ध-मानवौघ यी नै हुन् गुरुमण्डल ॥**
**त्रिपुरा हुन् महाशक्ति उन्का शक्ति अनन्त छन् ।**
**ब्रह्माण्ड रचना गर्छिन् स्वयं यौटै अनन्त भै ॥**
**उन्कै चैतन्य पाएर सबै चेतन बन्दछन् ॥**
**प्रकाशरूपा त्रिपुरा सर्वत्र उनकै प्रभा ।**
**उन्कै प्रकाश पाएर विश्व हुन्छ प्रकाशित ॥**

**•गार्ग्यायणी•**

महात्रिपुरसुन्दरीको गतिशीलता दुई प्रकारले अभिव्यक्त हुन्छ । पहिलो पदविक्षेपका रूपमा र दोस्रो क्रमोदयका रूपमा । भगवती त्रिपुरसुन्दरी अपार शक्तिकी निधि हुन् । उनी असङ्ख्य शक्तिका रूपमा आफूलाई अभिव्यक्त गर्न सक्छिन् । अतः पदविक्षेप भन्नाले अनन्त शक्तिका रूपमा परिणत हुन सक्ने उनको सामर्थ्य बुझिन्छ अर्थात् अपार सृजनात्मक इच्छाशक्तिलाई नै पदविक्षेप भन्न सकिन्छ । देवीको शरीरबाट निस्कने अनगिन्ती किरणहरू नै शरीर धारण गरी आवरणचक्रमा रहेका आवरणशक्तिका रूपमा देवीको चारैतिर रहेका हुन्छन् । यसैलाई पदविक्षेप भनिन्छ भने दिव्यौघ, सिद्धौघ एवं मानवौघरूप अनन्त प्रकाशले युक्त गुरुमण्डलका रूपमा देवीको प्रसरण नै क्रमोदय हो ॥३५॥

**सेयं परा महेशी चक्राकारेण परिणमेत यदा ।**
**तद्देहावयवानां परिणतिरावरणदेवतस्सर्वाः ॥३६॥**
**आसीनां बिन्दुमये चक्रे सा त्रिपुरसुन्दरी देवी ।**
**कामेश्वराङ्कनिलया कलया चन्द्रस्य कल्पितोत्तंसा ॥३७॥**
**पाशाङ्कुशेक्षुचापप्रसूनशरपञ्च काञ्चित् स्वकरा ।**
**बालारुणारुणाङ्गी शशिभानुकृशानुलोचनत्रितया ॥३८॥**



**•श्रीविद्याप्रकाश•**

**तिनै महेशी त्रिपुरा चक्राकार भएपछि ।**
**उन्कै शरीरका भाग देवता सब बन्दछन् ॥**
**श्रीचक्रमा आवरण देवता जो प्रतिष्ठित ।**
**सबै नै त्रिपुराका हुन् देहावयव सुन्दर ॥**
**त्रिपुरसुन्दरीदेवी बिन्दुका रूपमा सधैँ ।**
**कामेश्वरसँगै बस्छिन् काखमा चन्द्रिकासरि ॥**
**उन्का चार भुजामा छन् चार आयुध उत्तम ।**
**पाश, अङ्कुश, उखुका दण्डको धनुले तीन ॥**
**फूलका पाँच छन् बाँण हतियार सुशोभन ।**
**बालसूर्यसरि रातो आभा उन्को छ शोभन ।**
**चन्द्र-सूर्य-अग्निरूप तीन आँखा समुज्ज्वल ॥**
**बिन्दुका बीचमा देवी महात्रिपुरसुन्दरी ।**
**श्रीचक्रबीचमा बस्छिन् समुज्ज्वल प्रकाश भै ॥**
**त्रिकोण र अष्टकोण, दशकोण दुई अनि ।**
**चौधकोण, आठदल, सोह्र दल अनि पछि ॥**
**तीन घेरा तीनवटा भू-बिम्ब सब चक्रका ।**
**सबैमा जो देवता छन् देवीकै सब अङ्ग हुन् ॥**
**देवीले चक्रको रूप लिँदा बिन्दु स्वयं बनी ।**
**अरू चक्रहरू बन्छन् उनकै अङ्ग देवता ॥**
**काखमा बस्दछिन् देवी कामेश्वरसँगै रमी ।**
**उनको छ दिव्य आभा सर्वत्र व्याप्त सुन्दर ॥**
**चन्द्रमा र सूर्य आगो देवीका तीन रूप छन् ।**
**उन्कै प्रकाशले विश्व सधैँ आलोकपूर्ण छ ॥**
**उनका छन् चार हात आयुध पनि चार छन् ।**
**पाश इच्छाशक्तिमय, अङ्कुश ज्ञानशक्ति हो ॥**
**धनुर्बाण क्रियाशक्ति देवीका तीन शक्ति यी ।**
**संवित् शक्ति स्वयं आफैँ देवी त्रिपुरसुन्दरी ॥**

**•गार्ग्यायणी•**

भगवती महात्रिपुरसुन्दरी जब श्रीचक्रका रूपमा परिणत हुन्छिन् तब यिनको तेजपुञ्जस्वरूप शरीरबाट निस्किएका किरणहरू उक्त शरीरका अवयवरूप आवरणदेवताका रूपमा परिणत भई श्रीचक्रका सर्वरोगहर आदि चक्रहरूमा रहन्छन् । अङ्गीस्वरूप भगवती महात्रिपुरसुन्दरी बिन्दुस्वरूप सर्वानन्दमय नामक प्रथम बैन्दवचक्रमा प्रकाशस्वरूप कामेश्वरको बायाँ काखमा बसेकी छिन् । भगवती महात्रिपुरसुन्दरीले चन्द्रमाको एउटा कलालाई आफ्नो शिरमा आभूषणको रूपमा धारण गरेकी छिन् । उनका चारवटा हातमा आयुधका रूपमा इच्छाशक्तिमय पाश, ज्ञानशक्तिमय अङ्कुश, क्रियाशक्तिमय उखुको लाँक्रोको धनु र पाँचवटा पुष्परूपी बाण रहेका छन् । यसले उनी इच्छाशक्ति, ज्ञानशक्ति र क्रियाशक्तिकी अधिष्ठात्री भएको सङ्केत दिन्छ । उनको वर्ण प्रातःकालीन सूर्यको जस्तो रातो रङ्गको छ । सोम, सूर्य र अग्निरूप तीन नेत्रले उनी अत्यन्त सुशोभित छिन् अर्थात् उनी सोम, सूर्य र अग्निको समष्टिस्वरूप पराशक्ति हुन् ॥३६—३८॥

**तन्मिथुनं गुणभेदादास्ते बिन्दुत्रयात्मके त्र्यश्रे ।**
**कामेशी मित्रेशप्रमुखबिन्दुत्रयात्मना विततम् ॥३९॥**

**•श्रीविद्याप्रकाश•**

**परमात्मा त यौटै छन् ती आफैँ पनि छुट्टिए ।**
**संसारको सृष्टि गर्न शिवशक्ति दुई बने ॥**
**स्त्री र पुरुषको रूप काम–कामेश्वरी बनी ।**
**प्रविष्ट एकअर्कामा भै गरे विश्वसर्जन ॥**
**त्रिकोणचक्रको बीच नाम बैन्दवचक्र जो ।**
**बनेको छ त्यसैमा नै बस्छन् ती मिथुनै भई ॥**
**तिनैको हुन्छ विस्तार विभिन्न शक्तिमा पछि ।**
**यिनै शक्ति पछि हुन्छन् प्रपञ्च विश्वको पनि ॥**
**सम्पूर्ण विश्वब्रह्माण्ड त्रिपुराकै प्रपञ्च हो ।**
**विस्तारित उनैबाट विलीन उनमै हुने ॥**



**•गार्ग्यायणी•**

प्रकाश र विमर्शको समरसाकार कामेश्वर—कामेश्वरीरूप दिव्यदम्पति श्रीचक्रको माझमा रहेको महाबिन्दुस्वरूप सर्वानन्दमय नामक बैन्दवचक्ररूपी आसनमा आदिगुरुदम्पतिका रूपमा विराजमान छन् । तिनै आदिगुरुदम्पति आफ्नो विस्तारका क्रममा १— मित्रेशनाथ एवं कामेश्वरी, २— उड्डीशनाथ एवं वज्रेश्वरी र ३— षष्ठीशनाथ एवं भगमालिनीका रूपमा दिव्यौघ, सिद्धौघ एवं मानवौघ गुरुदम्पतिको रूप धारण गरी महाबिन्दुबाट विस्तारित सर्वसिद्धिप्रद नामक त्रिकोणचक्रका एकएक कोणमा विराजमान छन् ॥३९॥

**वसुकोणनिवासिन्यो यास्ताः सन्ध्यारुणवशिन्याद्याः ।**
**पुर्यष्टकमेवेदं चक्रतनोस्संविदात्मनो देव्याः ॥४०॥**

**•श्रीविद्याप्रकाश•**

**श्रीचक्रको आठ कोण त्यसमा आठ शक्ति छन् ।**
**वशिनी आदि ती शक्ति अरुणरक्त रूपका ॥**
**पुर्यष्टक यही नै हो - देवीको सूक्ष्म देह हो ।**
**मन, चित्त, बुद्धि, पाँच प्राण नै आठ कोण हुन् ॥**
**चक्ररूप लिँदा देवी हुन्छिन् ती बिन्दुरूपकी ।**
**उनकै देहविस्तार अरु चक्रहरू बने ॥**
**त्रिपुरा हुन् संविदात्मा प्रकाश पूर्णज्ञानको ।**
**उन्कै प्रकाश हो विश्व उन्कै आभा र कान्ति हो ॥**
**चितिरूपा महादेवी पूर्णचैतन्य ब्रह्म हुन् ।**
**उन्कै चैतन्य पाएर विश्व चेतन बन्दछ ॥**

**•गार्ग्यायणी•**

श्रीचक्रको मध्यबिन्दुस्वरूप सर्वानन्दमय नामक बैन्दवचक्रमा प्रकाश र विमर्शको सामरस्यस्वरूप स्वयं भगवती त्रिपुरसुन्दरी कामेश्वर—कामेश्वरीरूप दिव्यदम्पतिको रूप धारण गरेर रहेकी छिन् भने सोही बिन्दुबाट विस्तारित सर्वसिद्धिप्रद नामक त्रिकोणचक्रका एकएक कोणमा मित्रेशनाथ एवं कामेश्वरी, उड्डीशनाथ एवं वज्रेश्वरी तथा षष्ठीशनाथ एवं भगमालिनीका रूपमा दिव्यौघ, सिद्धौघ र मानवौघ गुरुदम्पति रहेका छन् ।

भगवती त्रिपुरसुन्दरीको तेजोमय शरीरबाट निस्किएका किरणहरू उनका अवयवरूप विभिन्न आवरणदेवताका रूपमा परिणत भई श्रीचक्रका विभिन्न चक्रमा रहन्छन् । सोही क्रममा सर्वरोगहर नामक वसुकोणचक्रमा वशिनी, कामेश्वरी, मोदिनी, विमला, वरुणा, जयिनी, सर्वेश्वरी र कौलिनी नामक आठ शक्तिहरू रहेका छन् । यी आठ शक्तिहरू चैतन्यस्वरूप महात्रिपुरसुन्दरीका पुर्यष्टकरूप सूक्ष्मशरीर हुन् । यी आठ देवीहरूलाई सर्वरोगहर नामक वसुकोणचक्रमा रहस्ययोगिनीका नामले पूजा गरिन्छ ॥४०॥

**तद्विषयवृत्तयस्ताः सर्वज्ञादिस्वरूपमापन्नाः ।**
**अन्तर्दशारनिलया लसन्ति शरदिन्दुसुन्दराकाराः ॥४१॥**
**तद्वाह्यपंक्तिकोणेषु योगिन्यस्सर्वसिद्धिदाः पूर्वाः ।**
**देवीधीकर्मेन्द्रिय–विषयमया विशदवेशभूषाढ्याः ॥४२॥**

**•श्रीविद्याप्रकाश•**

**त्रिपुराको सूक्ष्म देह चक्रको अष्टकोण हो ।**
**विषयवृत्ति तिन्कै नै भित्रका दशकोण हुन् ॥**
**सर्वज्ञा आदि देवीका दिव्यरूप लिएर नै ।**
**प्रकाशित सधैँ हुन्छन् शरच्चन्द्रसरि तिनै ॥**
**आकाशमा चम्कने जो बिजुलीतुल्य तेजिला ।**
**देवीहरू रहेका छन् भित्रका दशकोणमा ॥**
**रक्षा सबैको ती गर्छन् चक्रका कोणमा रही ।**
**ज्ञानकर्मेन्द्रियहरू विषय तिनका दश ॥**
**शुभ्र आकारमा बस्छन् बाहिरी दशकोणमा ।**
**सिद्धि प्रदान यी गर्छन् भक्तका सर्वकार्यमा ॥**

**•गार्ग्यायणी•**

सर्वरक्षाकर नामक अन्तर्दशारचक्रमा पञ्चमहाभूत तथा पञ्चतन्मात्रा रहेका छन् । तिनै पञ्चमहाभूत तथा पञ्चतन्मात्रा नै शरद्कालीन चन्द्रमाको झैँ निर्मल प्रकाशस्वरूप भएका सर्वज्ञा, सर्वशक्ति, सर्वैश्वर्यप्रदा, सर्वज्ञानमयी, सर्वव्याधिविनाशिनी, सर्वाधारस्वरूपा, सर्वपापहरा, सर्वानन्दमयी, सर्वरक्षास्वरूपिणी र सर्वेप्सितफलप्रदा नामक दश योगिनीहरूका रूपमा उक्त चक्रमा रहेका छन् । यी दश योगिनीहरूलाई निगर्भयोगिनीका नामले सर्वरक्षाकर नामक अन्तर्दशारचक्रका दश कोणमा पूजा गरिन्छ ।



सर्वरक्षाकर नामक चक्रको बाहिर रहेको सर्वार्थसाधक नामक वहिर्दशारचक्रका दश कोणमा सर्वसिद्धिदा, सर्वसम्पत्प्रदा, सर्वप्रियङ्करी, सर्वमङ्गलकारिणी, सर्वकामदा, सर्वदुःखविमोचिनी, सर्वमृत्युप्रशमिनी, सर्वविघ्ननिवारिणी, सर्वाङ्गसुन्दरी र सर्वसौभाग्यदायिनी नामक दश शक्तिहरू रहेका छन्। यी शक्तिहरू भगवती त्रिपुरसुन्दरीका ज्ञानेन्द्रिय तथा कर्मेन्द्रियका विषयहरू हुन् । श्रोत्र, त्वक्, चक्षु, जिह्वा र घ्राणरूप ज्ञानेन्द्रियका शब्द, स्पर्श, रूप, रस र गन्धरूप पाँच विषयहरू एवं वाक्, पाणि, पाद, पायु र उपस्थस्वरूप कर्मेन्द्रियका वचन, आदान, विहरण, विसर्जन र आनन्दस्वरूप पाँच विषयहरू नै दश योगिनीका रूपमा श्वेत वस्त्र तथा शुभ्र आभूषणले युक्त भएर रहेका छन् । यी योगिनीहरूलाई कुलकौलयोगिनीका नामले सर्वार्थसाधक नामक वहिर्दशारचक्रमा पूजा गरिन्छ ॥४१–४२॥

**भुवनारचक्रभवनादेवीमनुकरणविवरणस्फुरगाः ।**
**सन्ध्यासवर्णवसनाः सञ्चित्यास्सम्प्रदाययोगिन्यः ॥४३॥**

**•श्रीविद्याप्रकाश•**

**चौध त्रिकोण अर्को छ सर्वसौभाग्यदायक ।**
**ज्ञानकर्मेन्द्रियहरू मन, चित्त र बुद्धि औ ॥**
**अहङ्कार मिली उनका चौधै करण दिव्य हुन् ।**
**सर्वसंक्षोभिणी आदि चौध शक्ति पनि सबै ॥**
**ती चौध कोणमा बस्ने हुन् आवरण देवता ॥**
**सन्ध्याकालीन आभा झैँ रूप तिनको छ शोभन ।**
**श्रीको सम्प्रदायबाट आएका योगिनी यिनी ॥**

**•गार्ग्यायणी•**

बैन्दवचक्र, त्रिकोणचक्र, वसुकोणचक्र र अन्तर्दशारचक्रका चार प्रभा तथा वहिर्दशारचक्रका दशवटा कोणहरू संयुक्त हुँदा चतुर्दशारचक्रको आविर्भाव हुन्छ । ज्ञानशक्ति र क्रियाशक्तिको स्फुरणबाट आविर्भूत यो चतुर्दशारचक्र

पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय तथा मन, बुद्धि, अहङ्कार एवं चित्तस्वरूप अन्तःकरणचतुष्टयमय रहेको छ[३१] । भगवती त्रिपुरसुन्दरीका यिनै चौध करणहरू नै सर्वसौभाग्यदायक नामक यस चक्रमा चौध योगिनीका रूपमा रहेका छन् । ती योगिनीहरू यसप्रकार छन् — सर्वसङ्क्षोभिणी, सर्वविद्राविणी, सर्वाकर्षिणी, सर्वाह्लादिनी, सर्वसम्मोहिनी, सर्वस्तम्भिनी, सर्वजृम्भिणी, सर्ववशङ्करी, सर्वरञ्जिनी, सर्वोन्मादिनी, सर्वार्थसाधिनी, सर्वसम्पत्तिपूरिणी, सर्वमन्त्रमयी र सर्वद्वन्द्वकरी । यी चौध योगिनीहरूलाई सम्प्रदाययोगिनीका नामले सर्वसौभाग्यदायक नामक चतुर्दशारचक्रमा पूजा गरिन्छ ॥४३॥

**अव्यक्तमहदहङ्कृतितन्मात्रस्वीकृताङ्गनाकाराः ।**
**द्विरदच्छदनसरोजे जयन्ति गुप्ततरयोगिन्यः ॥४४॥**

**•श्रीविद्याप्रकाश•**

**चौध कोणपछि अर्को कमल् छ आठ पत्रको ।**
**अव्यक्त र महत्तत्त्व, अहङ्कार अनि पुनः ॥**
**शब्द, स्पर्श, रूप, रस, गन्ध तन्मात्र पाँच यी ।**
**आठपत्रे कमलका रूपमा योगिनीहरू ॥**
**ती पूजित सधैँ हुन्छन् सृष्टिविस्तारकार्यमा ।**

**•गार्ग्यायणी•**

अव्यक्त (प्रकृति), महत् (बुद्धि), अहङ्कार एवं पञ्चतन्मात्रा गरी आठ तत्त्वहरू सर्वसङ्क्षोभण नामक अष्टदलचक्रमा अनङ्गकुसुमा, अनङ्गमेखला, अनङ्गमदना, अनङ्गमदनातुरा, अनङ्गरेखा, अनङ्गवेगिनी, अनङ्गाङ्कुशा र अनङ्गमालिनी नामक आठ योगिनीका रूपमा रहेका छन् । यी योगिनीहरूलाई सर्वसङ्क्षोभण नामक अष्टदलचक्रमा गुप्ततरयोगिनीका नामले पूजा गरिन्छ ॥४४॥

[३१] चतुष्चक्रप्रभारूपसंयुक्त परिणामतः ।
चतुर्दशाररूपेण संवित्तिकरणात्मना ॥
– योगिनीहृदयम्, १।१७॥



**भूतानीन्द्रियदशकं मनश्च देव्याविकार षोडशकम् ।**
**कामाकर्षिण्यादिस्वरूपतष्षोडशारमध्यास्ते ॥४५॥**

**•श्रीविद्याप्रकाश•**

**सोह्रपत्रे कमलका रूपमा सोह्र तत्त्व छन् ।**
**ती तत्त्व हुन् पाँच भूत, मन औ दश इन्द्रिय ॥**
**कामकर्षिणी आदि ती बीजका रूपमा रहे ।**
**प्रकाशरूपा त्रिपुरा तिनकै यो विमर्श हो ॥**
**सोह्रपत्रे कमल यो अकारादि स्वरात्मक ।**
**सबै आशा पूर्ण गर्ने चक्र हो सृष्टिरूपको ॥**

**•गार्ग्यायणी•**

पञ्चमहाभूत, पञ्चज्ञानेन्द्रिय, पञ्चकर्मेन्द्रिय र मन गरी सोह्र तत्त्वहरू सर्वाशापरिपूरक नामक षोडशदलचक्रमा सोह्र योगिनीका रूपमा रहेका छन् । ती सोह्र योगिनीहरू यसप्रकार छन् — कामाकर्षिणी, बुद्ध्याकर्षिणी, अहङ्काराकर्षिणी, शब्दाकर्षिणी, स्पर्शाकर्षिणी, रूपाकर्षिणी, रसाकर्षिणी, गन्धाकर्षिणी, चित्ताकर्षिणी, धैर्याकर्षिणी, स्मृत्याकर्षिणी, नामाकर्षिणी, बीजाकर्षिणी, आत्माकर्षिणी, अमृताकर्षिणी र शरीराकर्षिणी । यी सोह्र योगिनीहरूलाई सर्वाशापरिपूरक नामक षोडशदलचक्रमा गुप्तयोगिनीका नामले पूजा गरिन्छ ॥४५॥

**मुद्रास्त्रिखण्डया सह संविन्मय्यस्समुच्छ्रितास्सर्वाः ।**
**आदिमही गृहवासाभासाबालार्ककान्तिभिस्सदृशा ॥४६॥**
**आधारनवकमस्या नवचक्रत्वेन परिणतं येन ।**
**नवनाथशक्तयोऽपि च मुद्राकारेण परिणतं येन ॥४७॥**

**•श्रीविद्याप्रकाश•**

**श्रीचक्रको भूपुरमा तीन रेखा छ उत्तम ।**
**यौटा त संवित्मय छ नौ मुद्रा छन् त्यहाँ पनि ॥**

**बालसूर्यसरि आभा रातो अरुण कान्ति छ ।**
**त्रिखण्डले युक्त भई नौ मुद्रा छन् समुज्ज्वल ॥**
**यिन्का आधार नौ जो छन् ती भए चक्र नौ अनि ।**
**अकूल चक्र पहिलो सर्वाधार शिवै भए ॥**
**मूलाधार, स्वाधिष्ठान, मणिपूर, अनाहत ।**
**विशुद्धि, लम्बिका, आज्ञा, सहस्रार समेत नौ ॥**
**यिनै नौ नाथका शक्ति मुद्राका रूपमा स्थित ।**
**यिनैको ध्यान गर्दै नै गर्नू पूजन चक्रको ॥**

**•गार्ग्यायणी•**

इच्छाशक्ति, ज्ञानशक्ति र क्रियाशक्तिको समष्टिस्वरूप संवित् (चित्) शक्ति जब आफूभित्र अन्तर्लीन अवस्थामा रहेको विश्वप्रपञ्चलाई बाहिर प्रकट गर्न चाहन्छ तब क्रियाशक्तिप्रधान मुद्राको रूप धारण गरी अनुकूल कार्यसम्पादनरूप मोदन तथा उक्त अनुकूल कार्यका प्रति तन्मयतारूप द्रावणव्यापारमा संलग्न रहन्छ । यस क्रममा विमर्शस्वरूप पराशक्ति सर्वप्रथम वामा, ज्येष्ठा र रौद्रीस्वरूप तीन कलाको समष्टिस्वरूप अम्बिका एवं इच्छा, ज्ञान र क्रियाको समष्टिस्वरूप शान्ताशक्तिको स्वरूप धारण गरी त्रिखण्डामुद्राका रूपमा आफूलाई प्रकट गर्दछ । दाहिने हातका औंलाहरूले प्रकाशको अंशबाट आविर्भूत वामा, ज्येष्ठा र रौद्रीशक्तिको तथा देब्रे हातका औंलाहरूले विमर्शको अंशबाट आविर्भूत इच्छा, ज्ञान र क्रियाशक्तिको प्रतिनिधित्व गर्दछन् भने दाहिने र देब्रे दुवै हातका औंलाहरूको मिलनले समष्टिस्वरूप अम्बिका र शान्ताशक्तिको प्रतिनिधित्व गर्दछन् । प्रकाशस्वरूप दाहिने हातका औंलाहरू पहिलो खण्ड, विमर्शस्वरूप देब्रे हातका औंलाहरू दोस्रो खण्ड र ती दुवैको मिलनस्वरूप तेस्रो खण्ड गरी तीन खण्डबाट यस मुद्राको निर्माण हुने भएकाले यसलाई त्रिखण्डा मुद्रा भनिएको हो । प्रकाश र विमर्शस्वरूप औंलाहरूको मिलनबाट बन्ने भएकाले त्रिखण्डा मुद्रा संवित्स्वरूप भगवती त्रिपुरसुन्दरीस्वरूप छ र यो मुद्रा श्रीचक्रका नौ वटा चक्रहरूमा विद्यमान मुद्राहरूको समष्टिस्वरूप भएकाले ती सबैमा व्याप्त छ त्यसैले यस मुद्रालाई व्यापिका मुद्रा पनि भनिन्छ[३२] ।

३२ त्रिखण्डारूपमापन्ना सदा सन्निधिकारिणी ।
सर्वस्य चक्रराजस्य व्यापिका परिकीर्तिता ॥
– योगिनीहृदयम्, १।५८॥



सुषुम्णाको मूलमा रहेको सहस्र दलले युक्त अकुलचक्र, लिङ्गमूलदेखि दुई अङ्गुल तल रहेको चारवटा दलले युक्त मूलाधारचक्र, मूलाधारचक्रदेखि साँढे चार अङ्गुल माथि रहेको छवटा दलले युक्त स्वाधिष्ठानचक्र, नाभिमा रहेको दशवटा दलले युक्त मणिपूरचक्र, हृदयमा रहेको बाह्र दलले युक्त अनाहतचक्र, कण्ठमा रहेको सोह्रवटा दलले युक्त विशुद्धिचक्र, कण्ठदेखि चार अङ्गुल माथि तालुमूलमा रहेको आठवटा दलले युक्त लम्बिकाचक्र, भ्रूमध्यमा रहेको दुईवटा दलले युक्त आज्ञाचक्र र निधारमा रहेको बिन्दुचक्र यी नौ स्थानहरू शक्तिका आधार हुन् । यी नौ आधारहरूमा श्रीचक्रका नौवटा चक्रहरूको भावना गर्नुपर्दछ । अकुलचक्रमा त्रैलोक्यमोहनचक्रको, मूलाधारचक्रमा सर्वाशापरिपूरकचक्रको, स्वाधिष्ठानचक्रमा सर्वसङ्क्षोभणचक्रको, मणिपूरचक्रमा सर्वसौभाग्यदायकचक्रको, अनाहतचक्रमा सर्वार्थसाधकचक्रको, विशुद्धिचक्रमा सर्वरक्षाकरचक्रको, लम्बिकाचक्रमा सर्वरोगहरचक्रको, आज्ञाचक्रमा सर्वसिद्धिप्रदचक्रको र बिन्दुचक्रमा सर्वानन्दमयचक्रको भावना गर्नुपर्दछ । यी नौ चक्रका चक्रेश्वरी देवीहरू क्रमशः त्रिपुरा, त्रिपुरेश्वरी,त्रिपुरसुन्दरी, त्रिपुरवासिनी, त्रिपुराश्री, त्रिपुरमालिनी, त्रिपुरासिद्धि, त्रिपुराम्बिका र महात्रिपुरसुन्दरी नै क्रमशः सर्वसङ्क्षोभिणी, द्राविणी, सर्वाकर्षिणी, सर्ववशंकरी, उन्मादिनी, महाङ्कुशा, खेचरी, बीज र योनिमुद्राको स्वरूप धारण गरी तत्तत् चक्रमा रहन्छन् । आचार्य पुण्यानन्दले यी नौ वटा मुद्राहरू श्रीचक्रमा रहेका तीन वटा भूपुरमध्ये प्रथम भूपुरमा रहन्छ भनेका छन् तर कामकलाविलासको चिद्वल्ली नामक टीकाकार आचार्य नटनानन्दले एकएक मुद्रा एकएक चक्रमा रहने कुरा उल्लेख गरेका छन्[३३] ॥४७॥

**अस्यास्त्वगादिसप्तकमाकारश्चैवमष्टकं स्पष्टम् ।**
**ब्राह्म्यादिमातृरूपं मध्यमभूबिम्बमेतदध्यास्ते ॥४८॥**

३३. एतास्तु मुद्राः चतुरस्रादिबैन्दवान्तनवचक्राधिष्ठाननायिकाः ....।
– कामकलाविलास, चिद्वल्ली, पृ. १३१ ।

**•श्रीविद्याप्रकाश•**

**भूबिम्बको मध्यरेखा त्यसमा सात धातु औ ।**
**आठौँ आकार देवीका मातृकारूप आठ हुन् ॥**
**ब्राह्मी हुन् पहिलो शक्ति दोस्रो माहेश्वरी अनि ।**
**तेस्रो चौथो मातृका हुन् कौमारी अनि वैष्णवी ॥**
**वाराही अनि ऐन्द्री र चामुण्डा कमला यिनी ।**
**मातृका आठ शक्ति हुन् मध्यभूबिम्बमा स्थित ॥**

**•गार्ग्यायणी•**

भगवती त्रिपुरसुन्दरीदेवीका छाला, रगत, मासु, हाड, मज्जा र शुक्ररूप सात धातु तथा आकार गरी यी आठ वस्तुहरू ब्राह्मी, माहेश्वरी, कौमारी, वैष्णवी, वाराही, माहेन्द्री, चामुण्डा र महालक्ष्मीका रूपमा व्यक्त हुन्छन् । यी आठ मातृकाहरू श्रीचक्रको मध्यभूपुरमा निवास गर्दछन् त्यसैले यिनको पूजा मध्यभूपुरमा गरिन्छ ॥४८॥

**अणिमादिसिद्धयोऽस्याः स्वीकृतकमनीकामिनीरूपाः ।**
**विद्यान्तरफलभूता गुणभावेनान्त्यभूनिकेतनगाः ॥४९ ॥**

**•श्रीविद्याप्रकाश•**

**भूबिम्बको अन्त्यरेखा तिनमा आठ सिद्धि छन् ।**
**अणिमा, महिमा सिद्धि, गरिमा, लघिमा अनि ॥**
**प्राप्ति, प्राकाम्य, ईशित्व, वशित्व आठ सिद्धि हुन् ।**
**शक्तिका रूपमा छन् यी आठ सिद्धि त चक्रमा ॥**
**ती सिद्धिहरू छन् आठ विद्याका रूपमा स्थित ।**
**हठयोग आदिद्वारा फलीभूत हुने यिनै ॥**

**•गार्ग्यायणी•**

भगवती त्रिपुरसुन्दरीदेवीका अणिमा, महिमा, गरिमा, लघिमा, प्राप्ति, प्राकाम्य, ईशित्व र वशित्व नामक आठ सिद्धिहरू अत्यन्त सुन्दरी देवीहरूका रूपमा श्रीचक्रको अन्तिम भूपुरमा रहन्छन् । हठयोग आदिद्वारा सिद्ध हुने यी आठ सिद्धिहरूको पूजा श्रीचक्रको अन्तिम भूपुरमा गरिन्छ ॥४९॥



**परमानन्दानुभवः परमगुरुर्निर्विशेषबिन्द्वात्मा ।**
**स पुनः क्रमेण भिन्नः कामेशत्वं ययौ विमर्शांशात् ॥५०॥**

**•श्रीविद्याप्रकाश•**

**परमानन्द चाहन्छन् विश्वमा जति जीव छन् ।**
**कुनै प्राणी छँदै छैन यसलाई न चाहने ॥**
**यही नै हो पूर्ण तत्त्व त्रिपुरा चितिरूपिणी ।**
**निर्विशेष आत्मतत्त्व बैन्दवचक्ररूपिणी ॥**
**यहीं नै छ सामरस्य प्रकाश र विमर्शको ।**
**काम-कामेश्वरीको यो मिथुनीभूत पिण्ड हो ॥**
**सबै यी ज्ञानका स्रोत शिव नै विश्वका गुरु ।**
**दिव्य सिद्ध मानवौघ गुरुत्रय पनि उनै ॥**
**उनैको यो पूर्ण पीठ बिन्दुचक्र छ उत्तम ।**
**श्रीचक्रको प्राण हो यो यही नै ब्रह्मतत्त्व हो ॥**
**उच्छून भै यही बिन्दु त्रिबिन्दु हुन्छ भिन्न भै ।**
**विमर्शको रूप लिन्छ व्यक्त हुन्छ प्रपञ्च यो ॥**
**शिव बिन्दु पर गुरु परात्मा ब्रह्म हुन् पर ।**
**आफैँ उनी भिन्न हुन्छन् आफैँ शिष्य उमा बनी ॥**
**दीक्षा आफैँ स्वयं दिन्छन् रहेर गुरुभावमा ।**
**दीक्षा आफैँ स्वयं लिन्छन् रहेर शिष्यभावमा ॥**
**आफैँ पूर्ण ज्ञानरूप आफैँदेखि अभिन्न जो ।**
**शिष्यलाई स्वयं दिन्छन् ज्ञान फैलिन्छ विश्वमा ॥**
**प्रकाश उनकै रूप स्वयं ज्योतिस्वरूप हुन् ।**
**सबैतिर छरी ज्योति गर्छन् विश्व प्रकाशित ॥**
**काम नै हुन् कामेश्वरी स्वयं यौटै दुई बनी ।**
**स्वयं प्रपञ्चित बनी स्वयं ब्रह्माण्ड रच्तछन् ॥**

**स्वयं चित्र भित्ति बनी विश्वको चित्र रच्नछन् ।**
**स्वयं आनन्दित बनी खुसी विश्व बनाउँछन् ॥**
**बिन्दु नै सृष्टिको मूल अरु चक्र प्रपञ्च हुन् ।**
**परमात्मा स्वयं आफैँ सबैमा व्यक्त बन्दछन् ॥**
**परमात्मा प्रकाशांश, विमर्शांश प्रपञ्च हो ।**
**काम-कामेश्वरी खेल्छन् विश्वको दिव्य खेल यो ॥**
**यही नै हो कामकला प्रकाश र विमर्शको ।**
**प्रतीक हो यो श्रीचक्र उनैको दिव्य विग्रह ॥**

**•गार्ग्यायणी•**

परिपूर्ण अहम्भावले युक्त परमानन्दस्वरूप परम शिव नै अखिल विश्वब्रह्माण्डका आदिगुरु हुन् । श्रीचक्रमा रहेको मध्यबिन्दु जो प्रकाश र विमर्शको सामरस्यस्वरूप छ त्यही नै आदिगुरु परम शिवको मुख्य अधिष्ठान हो । त्यहीँ प्रकाशरूप परम शिव आफ्नो विमर्शरूप पराशक्तिका साथ सामरस्यस्वरूपले रहेका छन् । जब परम शिव वा पराशक्तिमा आफूभित्र अवस्थित विश्वलाई बाहिर प्रकट गर्ने इच्छाको उदय हुन्छ तब त्यही इच्छारूप किञ्चित् स्पन्दनका माध्यमबाट परम शिवले आफूलाई कामेश्वररूप गुरु तथा कामेश्वरीरूप शिष्यका रूपमा विभक्त गरी गुरुशिष्यभावले समस्त शास्त्रको आविर्भाव गर्दछन् । यही नै गुरुपरम्पराको आदिबिन्दु हो । यहीँबाट दिव्यौघ, सिद्धौघ र मानवौघ क्रमले गुरुपरम्पराको विकास भयो ॥५०॥

**आसीनः श्रीपीठे कृतयुगकाले गुरुशिवो विद्याम् ।**
**तस्यै ददौ स्वशक्त्यै कामेश्वर्यै विमर्शरूपिण्यै ॥५१॥**

**•श्रीविद्याप्रकाश•**

**श्रीचक्रमा छ श्रीपीठ त्रिकोणमध्यबिन्दुमा ।**
**त्यहीँ छन् ज्ञानका दाता गुरुका रूपमा शिव ॥**
**कामेश्वरी शक्ति उनकी त्यहीँ छिन् शिष्यरूपमा ।**
**दुवै यौटै छैन केही भिन्नता दुईमा कुनै ॥**



**तैपनि शिवले आफ्नै अभिन्न शक्तिलाई नै ।**
**आफैँदेखि पृथक् राखी दिए त्यो शिष्यको पद ॥**
**प्रकाश शिव हुन् शक्ति विमर्श शिवकै सखा ।**
**काम-कामेश्वरी नै ती प्रकाश र विमर्श हुन् ॥**
**शक्तिलाई दिए विद्या शिव आफैँ गुरु बनी ।**
**कामेश्वरी बनिन् शिष्य तन्त्रविद्या प्रकाश भो ॥**
**श्रीविद्या त्रिपुरा नै हुन् उनैबाट प्रकाश भो ।**
**यसै प्रकाशले विश्व आलोकित पनि भयो ॥**

**•गार्ग्यायणी•**

श्रीचक्रमा अवस्थित मध्यबिन्दु कामरूपपीठ, पूर्णगिरिपीठ र जालन्धरपीठको समष्टिस्वरूप उड्डीयानपीठको प्रतीक हो जहाँ चर्यानन्दनाथका नामले सत्ययुगमा स्वयं प्रकाशरूप शिवले आफूदेखि अभिन्न तुरीयबीजकी अधिष्ठात्री विमर्शस्वरूपिणी महात्रिपुरसुन्दरीदेवीलाई श्रीविद्याको उपदेश गरे ॥५१॥

**सेयायमित्रसंज्ञां स्थानेशान् ज्येष्ठमध्यबालाख्यान् ।**
**चित्प्राणविषयभूतान् त्रेतायुगादिकारणत्रिगुरून् ॥५२॥**
**बीजत्रितयाधिपतीन् परीक्ष्य विद्यां प्रकाशयामास ।**
**एतैरोघत्रितयं समनुगृहीतं गुरुक्रमो विदितः ॥५३॥**

**•श्रीविद्याप्रकाश•**

**परा भट्टारिका देवी महात्रिपुरसुन्दरी ।**
**ऊर्ध्वत्रिकोणको ऊर्ध्वबिन्दुमा छिन् अवस्थित ॥**
**यसैलाई कामपीठ भनिन्छ सम्प्रदायमा ।**
**ऊर्ध्वदेवनाथ शिव बस्छन् कामेश्वरीसँगै ॥**
**यी हुन् त्रेतायुगगुरु ज्येष्ठ स्थानेश भन्दछन् ।**
**वाग्भवबीजका यी हुन् अधिष्ठाता गुरु महान् ॥**
**जालन्धरपीठ अर्को बिन्दु दक्षिण कोणको ।**
**षष्ठदेवनाथसँगै बस्छिन् वज्रेश्वरी यहाँ ॥**
**कामराज बीजका यी अधिष्ठाता गुरु शिव ।**

**यी हुन् द्वापरगुरु प्रसिद्ध मध्य नामका ॥**
**अर्को पीठ पूर्णगिरि बिन्दु उत्तरकोणको ।**
**यहाँ मित्रदेवनाथ शक्ति छिन् भगमालिनी ॥**
**शक्तिबीजअधिष्ठाता यी भए बाल नामका ।**
**कलियुगगुरु यी हुन् सम्प्रदायप्रवर्तक ॥**
**सर्वानन्दमय चक्र त्रिकोणमध्यबिन्दु यो ।**
**त्रिपुरसुन्दरीकै हो विस्तार बिन्दु चक्रको ॥**
**दिव्य-सिद्ध-मानवौघ गुरु पङ्क्तिविकास भो ।**
**देवी कामेश्वरीबाटै श्रीविद्यासम्प्रदायको ॥**
**त्रिपुरा हुन् महाविद्या श्रीविद्या सर्वउत्तम ।**
**यही नै हो परा विद्या यसैमा भवमोक्ष छ ॥**

**•गार्ग्यायणी•**

मध्यत्रिकोणचक्रको अग्रबिन्दुमा अवस्थित कामरूपपीठमा ऊर्ध्वदेवनाथका नामले त्रेतायुगमा स्वयं परमशिवले नै आफूदेखि अभिन्न वाग्भवबीजकी अधिष्ठात्री कामेश्वरीलाई श्रीविद्याको उपदेश गरे । त्रिकोणचक्रको दक्षिणबिन्दुमा अवस्थित जालन्धरपीठमा षष्ठदेवनाथका नामले द्वापर युगमा स्वयं परमशिवले नै आफूदेखि अभिन्न कामराजबीजकी अधिष्ठात्री वज्रेश्वरीलाई श्रीविद्या प्रदान गरे । त्यसैगरी त्रिकोणचक्रको उत्तरबिन्दुमा अवस्थित पूर्णगिरिपीठमा मित्रदेवनाथका नामले कलियुगमा स्वयं परमशिवले नै आफूदेखि अभिन्न शक्तिबीजकी अधिष्ठात्री भगमालिनीलाई श्रीविद्या प्रदान गरे । कलियुगको प्रारम्भमा मित्रदेवनाथले लोपामुद्रा एवं महर्षि अगस्त्यलाई श्रीविद्या प्रदान गरे– यसैलाई दिव्यौघक्रम भनिन्छ । सिद्धौघक्रम अन्तर्गत कङ्कालतापस, धर्माचार्य, मुक्तकेशिनी र दीपकाचार्य गरी चारजना सिद्धगुरु मानिएका छन् भने मानवौघक्रम अन्तर्गत जिष्णुदेव, मातृगुप्तदेव, तेजोदेव, मनोजदेव, कल्याणदेव, रत्नदेव र वासुदेव गरी सातजना गुरु रहेका छन् ॥५२–५३॥



**उदितः पुण्यानन्दादिति कामकलाङ्गनाविलासोऽयम् ।**
**परशिवभुजङ्गभावाकर्षणहर्षाय कल्पते नित्यम् ॥५४॥**
**चिन्तान्तरङ्गतरलस्तृष्णासलिलः प्रपञ्चवाराशिः ।**
**यदनुग्रहेण तीर्णस्तस्मै श्रीनाथनाविकाय नमः ॥५५॥**

**•श्रीविद्याप्रकाश•**

**कृति पुण्यानन्दको यो कामकलाविलास हो ।**
**काम हुन् शिव साक्षात् कला श्रीत्रिपुरा स्वयम् ॥**
**यी दुई नाम छन् बेग्लै तर ती त अभिन्न छन् ।**
**तत्त्वतः एउटै वस्तु लोकमा दुईझैँ भयो ॥**
**चनाको दुई फक्लेटो मिलेको बीजझैँ भयो ।**
**यिनैको मिथुनीभाव यसैबाट जगत् बन्यो ॥**
**सृष्टि, पालन, संहार, तिरोभाव, अनुग्रह ।**
**यी पाँच कामका निम्ति दुवैको यो विलास भो ॥**
**काम-कामेश्वरीको यो विलास वर्णनै गरी ।**
**खुसी होऊन् शिव स्वयं भनेरै ग्रन्थ यो बन्यो ॥**
**यसै विलासमा ठूलो परमानन्द व्याप्त छ ।**
**यसै आनन्दको भाव जनमानसमा बढोस् ॥**
**आनन्दको स्रोत ठूलो विलास शिव-शक्तिको ।**
**यसै आनन्दले विश्व आनन्दित सदा रहोस् ॥**
**तृष्णाका जलले पूर्ण भव यो दुःख-सिन्धु हो ।**
**चिन्ताको छाल नै उठ्छ तर्न यो अति दुष्कर ॥**
**यसलाई पार गर्न श्रीनाथ माझीझैँ बनी ।**
**आऊन् कृपा गरी भन्ने प्रार्थना शिवलाई छ ॥**

**•गार्ग्यायणी•**

आचार्य पुण्यानन्दको मुखारविन्दबाट निस्सृत कामकलाविलास नामक प्रस्तुत ग्रन्थ केवलानन्दस्वरूप परमशिवको प्रीतिका लागि समर्थ छ । तृष्णारूपी जलमा चिन्तारूपी तरङ्गले भरिएको यो भवसिन्धु जसको अनुकम्पाले मैले

तरैं ती नाविकस्वरूप श्रीनाथ परमशिवलाई अतिशय श्रद्धा र भक्तिका साथ बारम्बार नमस्कार गर्दछु ॥५४—५५॥

**परमार्थनिबोधार्थमम्बिकाकृपयोद्‌गता ।**
**इयं गार्ग्यायणीव्याख्या कृता माधवशर्मणा ॥**

**धराशैलनभोनेत्रमितेऽब्दे आश्विने सिते ।**
**ग्रन्थः सम्पूर्णतां प्राप्तः पञ्चम्यां सोमवासरे ॥**

**पाएर शिवको दृष्टि शक्तियुक्त भएर यो,**
**गरैं गार्ग्यायणी व्याख्या उनैलाई समर्पण ॥**

इति श्रीपुण्यानन्दविरचिते कामकलाविलासे विद्यानाथभट्टोपाध्यायकृतं "श्रीविद्याप्रकाश"–नेपालीपद्यव्याख्यानं माधवप्रसादलामिछानेकृतं "गार्ग्यायणी"– नेपालीगद्यव्याख्यानञ्च सम्पूर्णम् ॥
**शिवमस्तु ।**



## सन्दर्भग्रन्थविवरण


१. नित्याषोडशिकार्णवम्, (सम्पा.) व्रजवल्लभ द्विवेदी, वाराणसेय संस्कृत विश्वविद्यालय, वाराणसी, १९६८ ई.सं.।

२. योगिनीहृदयम्, (सम्पा.) व्रजवल्लभ द्विवेदी, मोतीलाल बनारसीदास, वाराणसी, १९८८ ई.सं.।

३. श्रीतन्त्रालोकः, (सम्पा.) राधेश्याम चतुर्वेदी, चौखम्बा विद्याभवन, वाराणसी, २००२ ई.सं. ।

४. सौन्दर्यलहरी, गणेश एण्ड कम्पनी, मद्रास, १९५७ ई.सं. ।

५. विज्ञानभैरवः, (सम्पा.) व्रजवल्लभ द्विवेदी, मोतीलाल बनारसीदास, वाराणसी, १९८४ ई.सं.।

६. कुलार्णवतन्त्रम्, (सम्पा.) तारानाथ विद्यारत्न तथा आर्थर एवेलोन, मोतीलाल बनारसीदास, दिल्ली, १९७५ ई.सं. ।

७. ईशाद्यष्टोत्तरशतोपनिषदः, (सम्पा.) वासुदेव लक्ष्मण पणशीकर, चौखम्बा विद्या भवन, वाराणसी, १९९० ई.सं. ।

८. Tantras : Their philosophy and acult secrets, D. N. Boss & Hiralal haldar, Oriental Publishing Company, Calcutta,

९. वरिवस्यारहस्यम्, (सम्पा.) श्यामाकान्त चतुर्वेदी, चोखम्बा सुरभारती प्रकाशन, वाराणसी, २००५ ई.सं. ।

१०. कामकलाविलासः, (सम्पा.) श्यामाकान्त चतुर्वेदी, चोखम्बा सुरभारती प्रकाशन, वाराणसी, २००१ ई.सं. ।

११. विवेकचूडामणिः, गीताप्रेस, गोरखपुर, वि.सं. २०६५ ।

# श्लोकार्धानुक्रमणिका